# दुल्लभ

## वार्षिक - मुखपत्र

## रजत जयन्ती बिशेषाङ्क



प्रकाशक :-
श्री दुल्लभ माध्यामिक विद्यालय
ध्याम्पेसाल, गोरखा

# दुल्लभ

## वार्षिक - मुखपत्र

## रजत जयन्ती विशेषाङ्क

## २०४८

प्रकाशकः-

श्री दुल्लभ माध्यामिक विद्यालय
ध्याम्पेसाल गोरखा

# "दुल्लभ,,

## वार्षिक - मुखपत्र
## रजत जयन्ती विशेषाङ्क

## २०४८ माघ

---

संरक्षक:- प्र.अ. श्री चण्डिका भट्ट

सम्पादक मण्डल

| | | |
|---|---|---|
| प्रधान सम्पादक | – | शि. श्री जनार्दन भट्टराई |
| सह सम्पादक | – | शि. श्री होमनाथ धिताल |
| " " | – | शि. श्री कपिल देव भट्टराई |
| " " | – | शि. श्री जयकृष्ण ढकाल |
| " " | – | शि. श्री हिरामान श्रेष्ठ |

प्रकाशक:- श्री दुल्लभ माध्यामिक विद्यालय
ध्याम्पेसाल, गोरखा

गिरिजा प्रसाद कोइराला
प्रधानमन्त्री
काठमाण्डौं, नेपाल



फोन : २१२४९०
२१२६५३
४१४६०७

## शुभ कामना

श्री दुल्लभ मा·वि· च्याम्पेसालको रजत जयन्तीको उपलक्षमा "दुल्लभ" रजत जयन्ती विशेषाङ्क प्रकाशित हुन लागेको थाहा पाउँदा खुसी लागेको छ।

यस पत्रिकाको मार्फत दुल्लभ मा·वि ले गोर्खा जस्तो विकट पहाडी क्षेत्रमा शिक्षाको प्रसार र प्रजातन्त्रको सुदृढीकरणमा ठोस योगदान पुर्याउन सहायक बन्न सकोस भन्ने आशा राख्दै विद्यालयको उत्तोत्तर प्रगतीको कामना गर्दछु।

जय नेपाल

गिरिजा प्र. कोइराला

मिति
०४८।९।२६

# शुभकामना

श्री दुल्लभ मा. वि. ध्याम्पेशाल गोरखाको रजत जयन्तिको शुभ उपलक्ष्यमा यस विद्यालयको उत्तरोत्तर उन्नति एवं प्रगतिको लागि हार्दिक । हार्दिक ।। मंगलमय शुभकामना व्यक्त गर्दछु ।

२५ वर्ष अघिको विद्यालय प्रारम्भका दिन एवं ध्याम्पेशालको अवस्था र आजको स्थिति आफैले पनि कल्पना गर्दा अचम्मको अनुभूति हुन्छ । यति विकासको वाक्जुद पनि मेरो कल्पनाको ध्याम्पेशालमा अझै पनि के के कल्पनाको ध्याम्पेशालमा उत्साह र उमंग त्यहि गतिमा अगाडि बढ्न सकेको भए आज यसको रूप अर्कै हुने थियो । तसर्थ पुनः यस भेगको पूनर्जागिरणको आवश्यकताको महशुस गरेको छु ।

विद्यालय भनेको विवेक र ज्ञान सिक्ने र सिकाउने मन्दिर हो । विद्यालयसँग आवद्ध सबैमा यस चेतनाको जागरण होस । सबै अनुशासित गुणी, विकासप्रेमी बनुन र विद्यालयको प्रगतिको लागि सोचुन । जसरी माध्यामिक स्तरको शिक्षासम्म सुविधा यसले पु-याएको छ । त्यस्तै यसले भोली उच्च शिक्षाको सेवा पु-यान सफल होस् । पुन यस सुखद घडीमा यहि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछु । धन्यवाद ।

यदु प्रसाद भट्ट
तान्द्राङ ६ गोरखा ।

## दुई शब्द

"दुल्लभ" सांच्चै कुनै पनि कुराको उपलब्धिको पछाडी दुःख त मै हाल्छ र त्यसरी पाएको उपलब्धि दीगो र महत्वपूर्ण पनि हुन्छ । "दुल्लभ" यस विद्यालयको नामाकरण दुल्लभ नामक ख्याति प्राप्त सन्तको पवित्र सम्झनामा राखिएको हो । यसले आजसम्मका अप्ठ्याराहरूलाई पछाडी छाडी कच्चा अवस्था पारगरी पूर्ण युवावस्थामा पाइलो टेकैको छ । हाल आएर यत्र-तत्र सर्वत्र फैलिएका यसका किरणहरू उपादेयनै छन् भन्नमा प्रश्नवाचक नहोला।

हामिले दुल्लभ नामक पहिलो अंक प्रकाशन गरी यहाँहरूको सेवामा टक्र्याएका थियौं र आज दोस्रो अंक रजत जयन्ती विशेषाङ्कको रूपमा यहाँहरूको अगाडी राखेका छौं । हाम्रो यो प्रयासमा अपरीपक्वता, शायद त्रुटी पनि होलान्, यीनलाई बिवेकशिल पाठकहरूले "नीर क्षीर न्यायेन" लाई सोचेंर सुझावहरू दिनु भए हामी कृत्य-कृत्य हुने थियौं साथै आगामी प्रयासहरूमा अझै सुदृढ हुने थियौं ।

अन्तमा यसले सदाझैं यहाँहरूको ममता पाउनेनै छ भन्ने आशा राख्दै यो प्रयासको लागि जो जसले जहाँबाट जसरी सहयोग पु-याउनु भएको छ सम्पूर्णमा हार्दिक कृतज्ञता जाहेर गर्दछौं ।

## विषय-सूची


| क्र.सं. | शीर्षक | विषय | लेखक | पृष्ठ |
|---|---|---|---|---|
| १ | दुर्लभ मा.वि. एक झलक | प्रतिवेदन | प्र.अ. चण्डिका भट्ट | १ |
| २ | उद्गार | कविता | शि. जनार्दन भट्टराई | ९ |
| ३ | दुर्लभ मा.वि. तर्फ फर्केर हेर्दा | लेख | डा. टीका पोखरेल | १० |
| ४ | दुर्लभ प्रति | कविता | प्रेमचन्द श्रेष्ठ | १२ |
| ५ | साँचो छ | कविता | शि. होमनाथ धिताल | १३ |
| ६ | अतितको सम्झना | लेख | शितलकाजी श्रेष्ठ | १४ |
| ७ | तिमीलाई शुभकामना | कविता | शोभा भट्ट | १६ |
| ८ | शिक्षाको जीन्दगी | कविता | सुरेश पनेरु | १७ |
| ९ | दुर्लभ तिमीलाई शुभकामना | कविता | जेनी प्रधान | १७ |
| १० | चश्मा | हास्यव्यङ्ग | नवराज भट्ट | १८ |
| ११ | संसारदेखि किन दुर दीप | कविता | शि. कृष्ण बहादुर वानियाँ | १९ |
| १२ | दुर्लभ प्रति | कविता | गोविन्द भट्टराई | २० |
| १३ | ती छैस्का | मुक्तक | ढक नाथ वस्ताकोटी | २० |
| १४ | गोर्खालीको सम्बन्धमा | लेख | नारायण प्र. बोहरा | २१ |
| १५ | एक सम्बोधन कसलाई? | कविता | अमृत भट्टराई | २२ |
| १६ | हाम्रो धर्म हाम्रो जीवन | कविता | पं. नारायण पोखरेल | २३ |
| १७ | विद्यार्थी | कविता | जयकृष्ण ढकाल | २४ |
| १८ | दुर्लभ प्रति | कविता | तेज बहादुर श्रेष्ठ (अभागी) | २५ |
| १९ | म र मेरो व्यवसाय | लेख | टुक नाथ अधिकारी | २६ |
| २० | रीस गर्नु छ मलाई | कविता | प्रेम बहादुर कार्की | २८ |
| २१ | दुर्लभ अमर वन | कविता | यदु कुमार लामीछाने | २९ |
| २२ | अस्पतालको प्रारम्भ कसरी भयो? | सामयीक चर्चा | | ३० |
| २३ | बिताउ छौं पच्चिस वसन्त | कविता | शि. कालीका भट्टराई | ३१ |
| २४ | दुर्लभ | कविता | सूर्य देवी सिखडा | ३२ |
| २५ | शुभकामना दुर्लभ तिमीलाई | कविता | चमेली पोखरेल | ३२ |
| २६ | सिकौं साथी | कविता | सरला गुरुङ्ग | ३५ |
| २७ | विद्यार्थी हामीले | कविता | राजेश श्रेष्ठ | ३६ |
| २८ | म के रहेछु | कविता | मोद राज भट्ट | ३६ |
| २९ | विश्व प्रसिद्ध तीन टावर | सामयकि जानकारी | | ३७ |
| ३० | दुर्लभ ज्योतिष प्रति श्रद्धाञ्जली | कविता | शि. कपिल देव भट्टराई | ३८ |
| ३१ | पैसा | कविता | प्रेमबहादुर न्यौपाने | ३९ |

| क्र.सं. | शीर्षक | विषय | लेखक | पृष्ठ |
| --- | --- | --- | --- | --- |
| ३२ | समय | कविता | वासुदेव कोइराला | ४० |
| ३३ | नारीको देन | कविता | सुश्री योग लक्ष्मी भट्ट | ४१ |
| ३४ | मान्छे वन | कविता | राम कुमार अंगाई | ४३ |
| ३५ | शहीद | कविता | सुरेन्द्र श्रेष्ठ | ४४ |
| ३६ | नेपाल आमाको सन्देश | कविता | कृष्ण कुमार वि.क. | ४५ |
| ३७ | हामी नेपाली | कविता | दिपक देवकोटा | ४५ |
| ३८ | प्रजातन्त्रको प्रभात | कविता | कृष्ण प्र. घिमीरे | ४६ |
| ३९ | अतितको सम्झना | कविता | श्यम लामीछाने र श्रेष्ठ | ४७ |
| ४० | तिमी प्रतिष्ठित वन | कविता | शुशिला भट्ट | ४८ |
| ४१ | ज्योति छर्दै जाऊ | कविता | कृष्ण कुमार श्रेष्ठ | ४९ |
| ४२ | सच्चाईको साथी इतिहास | कविता | नवराज भट्टराई | ५० |
| ४३ | नेपाल प्रति | कविता | सुमदत्त न्यौपाने | ५० |
| ४४ | नेपाल जुनियर रेडक्रस सर्कल | | शि. नायक जनार्दन भट्टराई | ५१ |
| ४५ | शहीदको सम्झनामा | कविता | शि. हिरामान श्रेष्ठ | ५२ |
| ४६ | दुल्लभ फुलि रहोस ध्याम्पेसालमा | कविता | प्रमोद श्रेष्ठ "हर्ष" | ५३ |
| ४७ | रमाईलो गणित | | कृष्ण घिमिरे | ५४ |


-----

# श्री दुल्लभ मा.वि.ः एक झलक

– प्र.अ. चण्डिका भट्ट

यस विद्यालयले आफ्नो २४ बसन्त पार गरी २५औं वर्षमा प्रवेश गरेको यस शुखद उपलक्ष्यमा यही माघ १ गते देखि ५ दिनसम्म बिविध कार्यक्रमहरू सञ्चालन गर्दै आएका छौं । आज अन्तिम दिन, समारोह सम्बन्धी व्यस्त कार्यक्रममा विद्यालयको प्रगति समिक्षा प्रस्तुत गर्ने सौभाग्य पाएकोमा आफैलाई गौरबान्वीत ठान्दछु ।

अभिभावक महोदय।

रजत जयन्ती मनाउन गै रहेको यस घडीमा यस विद्यालयको उत्थान कार्यमा अतित देखि बर्तमान सम्मलाई सार संक्षेपमा सिंहावलोकन गर्नु र गराउनु प्रमुख दायित्व सम्झेको छु । पचहत्तर पैसाको अधिकृत पूँजीबाट शुरू गरिएको यस विद्यालयको जन्म माघे संक्रान्ती पर्वमा तान्दाङ्ग गा.वि.स. वडा नं. ५ ताराखसेमा भएको थियो । झण्डै २ वर्ष, कुपोषणले गुज्रीएको बालक जस्तै लुलो लङ्गडो अवस्थामा यस विद्यालय रह्यो । र यसलाई बढी व्यापक र मजबूत बनाउन अनि बढी से बढी मात्रामा हामी प्रमुख शत्रु गरिबीसंग जुधी रहेका यस क्षेत्रका बाल कर्णाधारको समुन्नत एवं उज्ज्वल भविष्यको निर्माण गराउने उद्देश्यले यसै चौतारो, जहां हामी यस भव्य कार्यक्रम मनाइ रहेकाछौं मा एक ऐतिहासीक कार्यको शुभारम्भ भयो । यस कार्यमा यस भेगका केही औंलामा गन्न सकिने शिक्षित युवाहरू यदु प्र. भट्ट, डा. टीका पोखरेल, टीकाराम शर्मा, कृष्ण प्रसाद भट्ट, देवेन्द्र भट्ट, सित्तलकाजी श्रेष्ठ, वीरेन्द्र पोखरेल को संगठित सकृयतामा एक मिडील स्कूल मात्र नभएर जनताका न्यूनतम मानवाधिकारसंग सम्बन्धित स्वास्थ्य, शिक्षा, संसूचन, र सुरक्षा जस्ता प्रमुख सवालहरूमा सहयोग गर्द्दि हुन सक्ने विद्यालय, स्वास्थ्य चौकी, हुलाक, प्रहरी चौकी आदि आधारभूत योजनाहरू बोकेर ध्याम्पेसाल विकास समितिको नामले यो थलो अघि बढ्यो । यस महान कार्यको लागि आवश्यक जग्गा प्रदान गर्नु हुने स्व. दीप बहादुर बानीयां सदा सर्वदा श्रद्धाका पात्र हुनु हुन्छ । आज उहां हाम्रो माझ हुनु हुन्न तर पनि उहांको त्याग र योगदान हाम्रो लागि चीरस्मरणिय रहनेछ । यस घडीमा उहांको आत्माले चीर शान्ती पाओस भनि कामना सहित उहां प्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्न चाहन्छु ।

यहां अवस्थित विद्यालय एवं अन्य संघ-संस्थाको उत्थानमा निःशुल्क सेवा गर्ने शिक्षकहरू, यस भेगका बुद्धिजीवी, किसान, व्यापारी, विद्यार्थी र स्वदेशी तथा विदेशी व्यक्ति एवं संस्थाहरू जसले आ-आफ्नो क्षेत्रबाट मनसा, बचसा र कर्मणा पु-याउनु भएको सहयोगको प्रतिफल नै आज हाम्रो सामुको उपलब्धीहरू हुन् । यस थलोले "आवश्यकता नै आविस्कारकी जननी हुन्" भन्ने तथ्यलाई एकातिर पुष्टी गरि रहेको छ भने अर्को तिर यस क्षेत्रलाई उघारी दिने काम गरेको छ । हिजोका दिनमा हामीले हरेक कुराहरू माग्न पर्ने स्थिती थिए भने आज आएर एउटा दृष्टीको केन्द्र विन्दु बन्न सफल भएको छ यो नै एक महान उपलब्धी हो ।

पच्चीस वर्ष अगाडी देखिएको यस थलोको तस्वीरका पाना पल्टाउदै आउंदा हामी यसका अनेकौं उतार चढावका घडीहरू भेट्न सक्छौं । अतित र वर्तमानको फरक हाम्रो सबुत हो भने भविष्यलाई सबक। यो विद्यालयको अनेकौं आफ्नै कथा र व्यथा छन्, आफ्नै विशेषता छन् । चुनौती र हांक प्रगतीको साधन, हिम्मताको कसौटी, धैर्य र संयमता प्रमुख चरित्र, यस विद्यालयको अनूकरणीय नमूना हुन् । जन्मकाल देखि नै धुपै लडाई लड्दै वीजयश्रीको माला पैरदै आज तरूण अवस्थामा छ र जोश र जांगरले भरिएको र निरन्तरतामा कमि छैन अझै महान लक्षहरूको रेखा कोर्दै अग्रसर भइ रहेको छ । यिनै पृष्ठभूमीको साथ अब यस विद्यालयको बिविध पक्षहरू माथि सार संक्षेपमा प्रकाश पार्न चाहन्छु ।

**शैक्षिक पक्ष**

विद्यालय भन्ने बित्तिकै ज्ञानको ज्योती प्रज्वलीत गर्ने थलो हो । यहाँआउने हरेक काँचो माटोलाई आदर्शको साँचोमा ढाली एउटा सक्षम, इमान्दार, उत्तरदायीत्व वहन गर्न सक्ने नागरिक उत्पादन गर्नु प्रमुख लक्ष हो । सिमित साधन र स्रोत, सिकाइ र सिक्ने उपयुक्त बातावरणको कमि हुँदा हुँदै पनि लगभग अर्ध विकट क्षेत्रमा अवस्थित यस विद्यालयको शैक्षिक स्तर राष्ट्रिय तुलनामा अग्र पंक्तिमा नै देखिन्छ । २०३५ सालदेखि यस विद्यालयले एस.एल.सी. परीक्षामा आफ्ना परीक्षार्थीहरू समावेश गराउँदै आएको छ जसको परीणामको झलकले माथीको भनाईलाई पुष्ट्याईं गर्दछ ।

**एस. एल. सी. परिक्षा परिमाणको तथ्याङ्क चार्ट**




स्केल: १ से.मी = १० जना

नोट: २०३५ देखि २०४७ मा सम्मिलित संख्या - ४९४
२०३५ देखि २०४७ सम्म उत्तीर्ण संख्या - ४५७

शैक्षिक सत्र २०४७।०४८ को परीक्षा परिणाम

| कक्षा | रजिष्टर्ड | सम्मिलित | उत्तीर्ण |
|---|---|---|---|
| १ | ७४ | ६३ | ३४ |
| २ | ४४ | ३९ | २३ |
| ३ | ४६ | ३८ | २६ |
| ४ | ५३ | ४७ | ३२ |
| ५ | ४६ | ४० | २४ |
| ६ | ११५ | १०६ | ८३ |
| ७ | ७७ | ७० | ६२ |
| ८ | १७० | १५५ | १२३ |
| ९ | १५८ | १३९ | १०३ |
| १० | ११६ | ११७ | ९३ |
| जम्मा | ९०२ | ८१४ | ६०३ |

प्रस्तुत तथ्याङ्को आधारमा शैक्षिक स्थितिलाई विश्लेषण गर्दा क्रमीक रूपमा संख्यात्मक एवं गुणात्मक विकास हुँदै गएको झलक पाईन्छ तर हाम्रो यो नै सुन्तुष्टीको विन्दु भने होइन् । विगतमा विद्यालयको आर्थिक एवं भौतिक पक्षहरू चुनौतीको रूपमा देखिएको बावजुद पनि यो नतिजा निस्कन सकेको छ भने अब त्यस पक्षमा कमसेकम न्यूनतम रूपले सुधार भै सकेको हुँदा अब मात्र गुणात्मकतालाई अरू सुदृढ गर्ने स्पष्ट नीति अख्तियार भइ सकेको छ । आज साधन सम्पन्न अत्याधुनिक शिक्षण साधनहरूले सुसम्पन्न विद्यालयको दाँजोमा यो विद्यालय पछि पर्नु हुन्न यो नै हाम्रो अटल विश्वास र दृढता रहेको छ । यसको निम्ति आधारभूत ज्ञान, सिप र धारणागत विकासको निम्ति अतिरीक्त कक्षाहरूको सञ्चालन र वातावरणीय सुधारमा अभिभावक सम्पर्कलाई प्राथमिकता दिइएको छ ।

आर्थिक पक्ष

मैले माथि नै उल्लेख गरि सकेको छु कि पचहत्तर पैसाको अधिकृत पूंजीबाट आफ्ना विशाल आकांक्षा बोकेर अघि सरेको यस विद्यालयको आर्थिक झलकले पनि यसको प्रगतीको महिमा स्वयंमा गरि रहेको संकेत गर्दछ । विद्यालयमा ०३५।३६, ०४४।४५ र ०४६।४७ मा भएको लेखा परीक्षणको प्रतिवेदन अनुसार निम्न अवधीमा भएको कारोवारले विगतको आर्थिक झलकको प्रष्ट संकेत गर्दछ।

| | | |
|---|---|---|
| आ.व. ०३५।३६ सम्म | रू. | ४,७१,२९९।१८ |
| आ.व. ०३६।३७ देखि ०४४।४५ सम्म | रू. | १७,३५,०२६।६६ |
| आ.व. ०४५।४६ देखि ०४६।४७ सम्म | रू. | १४,४७,८५१।५९ |

## शैक्षिक सत्र ०४७/४८ को प्राप्ती र भुक्तानी

| प्राप्ती बिवरण | रकम | भुक्तानी बिवरण | | रकम |
|---|---|---|---|---|
| (१) अ. ल्या. | ८३,१३०।१५ | (१) त.भ./सं.को. | प्रा.वि. | १,५६,४३०।१९ |
| (२) अनूदान त.भ. | ३,५७,२००।१३ | | नि.मा.वि | ६५,६५०।४४ |
| (३) शुल्क | २,९४,०८३।५० | | मा.वि. | २,९०,४०२।९८ |
| (४) बिविध | १,०२५।- | | कर्मचारी | ६२,९४६।- |
| | | (२) परीक्षा | | ४४,०६४।- |
| | | (३) अडीट पारीश्रमिक | | २,९५०।- |
| | | (४) शैक्षिक सामग्री २,५७०।६० | | |
| | | (५) भौतिक सामग्री ९३,९५१।५५ | | |
| | | (६) बिविध | | ९,१६७।- |
| | | (७) बाकी | | ७,३०६।०२ |

## शैक्षिक सत्र ०४८/४९ को अनुमानित बजेट

| आय | रकम | व्यय | रकम |
|---|---|---|---|
| १. अनूदान | | १. क. त.भ. मा.वि. १० | ३,४६,४३९।- |
| क. तलबं भत्ता प्रा.वि. | १,७१,७६१।६५ | ख. त.भ. नि.मा.वि. ४ | ८९,४४०।- |
| ख. तलब भत्ता नि.मा.वि. | ७३,०४३।९५ | ग. त.भ. प्रा.वि. ९ | १,७५,०३२।- |
| ग. तलब भत्ता मा.वि. | १,६७,४१०।१० | घ. कर्मचारी ४ | ५९,३४५।- |
| २. शुल्क | ३,६३,३८७।- | २. मसलन्द | ६,०००।- |
| ३. विशेष अनुदान | १,५०,०००।- | ३. परीक्षा | ४२,०००।- |
| ४. बिविध | १०,०००।- | ४. समारोह पुरस्कार | २५,०००।- |
| | | ५. टी.ए./डी.ए. | ३,०००।- |
| | | ६. सह कार्यकलाप | ४,०००।- |
| | | ७. भौतिक सामग्री | १,७५,०००।- |
| | | ८. शैक्षिक सामग्री | ५,०००।- |
| | | ९. बिविध | ५,०००।- |
| जम्मा | ९,३५,६०२।८० | | ८,३५,२५६।- |
| | | बांकी | ३४६।८० |
| | | कूल जम्मा | ९,३५,६०२।८० |

## भौतिक पक्ष

चहुर हाम्रो कक्षा कोठा, रूखको फेर हाम्रो ओत लाग्ने थलोको रूपमा सुरूवात भै तपाई हाम्रो श्रम र मेहनतले भौतिक पक्षमा समेत अनूकरणीय प्रगती भएको कुरा सर्व विदितै छ । पुराना भवन र सामग्रीको जिर्णोद्धार अनि नयां १०८ हाते भवनको निर्माण कार्य समापन हाम्रा उपलब्धी हुन । अठार कोठे कक्षा कोठा भवनहरू, कार्यशाला, छात्रावास र शिक्षक आवास, फर्नीचर मौजुदा हुन् र अपर्याप्त फर्निचर, नव निर्मीत भवनको पूर्णता र सजावट बांकी अंश हुन जुन यस शैक्षिक वर्षका कार्यक्रममा पर्दछन् ।

परीवार चिनारी

यस विद्यालयको वर्तमान परीवार बिवरण निम्नानुसार प्रस्तुत गरेको छु ।

परिवार बिवरण (शै. स. ०४८।४९)

(क) शिक्षक बिवरण

| तह | स्विकृती दरबन्दी | कार्यरत | योग्यता | संख्या |
|---|---|---|---|---|
| मा.वि. | ७ | ९ | स्नातकोत्तर | १ |
| नि.मा.वि. | ३ | ३ | स्नातक | ९ |
| प्रा.वि. | ८ | ९ | प्रमाण पत्र | ५ |
| लेखापाल | - | १ | एस.एल.सी. | ७ |
| पियन | - | ३ | | |

(ख) छात्र-छात्रा बिवरण

| कक्षा | छात्र | छात्रा | जम्मा |
|---|---|---|---|
| १३७ | ३१ | ६८ | |
| २२६ | २२ | ४८ | |
| ३२३ | २५ | ४८ | |
| ४२८ | २७ | ५५ | |
| ५२५ | २५ | ५० | |
| ६६० | ५९ | ११९ | |
| ७४९ | ४२ | ९१ | |
| ८९६ | ६७ | १६३ | |
| ९१०९ | ६१ | १७० | |
| १० | ८३ | ४४ | १२७ |
| जम्मा | ५३६ | ४०३ | ९३९ |

यो संस्थापन कालका स्वयं सेवक शिक्षकहरूको नामावली

| | |
|---|---|
| यदु प्रसाद भट्ट | डा. टीका पोखरेल |
| कृष्ण प्रसाद भट्ट | टीकाराम शर्मा |
| शिक्षलकाजी श्रेष्ठ | वीरेन्द्र पोखरेल |
| देवेन्द्र भट्ट | सुरेश भट्ट |
| चण्डिका भट्ट | अग्नी अंगाई |
| जितेन्द्र भट्ट | हेमराज बन्त |
| टीप बहादुर लामीछाने | किसोर भट्ट |
| हेम बहादुर श्रेष्ठ | कृष्ण कुमार श्रेष्ठ |
| कर्णराज बन्त | रमेश अंगाई |
| होमनाथ धिताल | छन्द प्रसाद खनाल |

श्री दुल्लभ माधयमिक विधालय ध्यामपे सालमा पूर्व सेवा गरेका र सेवा गर्दै आएका शिक्षक तथा कर्मचारीहरुको नामावली:-

१. शि. श्री यदु प्रसाद भट्ट
२. शि. श्री शीतल काजी श्रेष्ठ
३. शि. श्री देवेन्द्र भट्ट
४. शि. श्री चण्डिका भट्ट (हाल प्र.अ.)
५. शि. श्री अग्नि अग्गाई
६. शि. श्री सुरेश भट्ट
७. शि. श्री हेम बहादुर श्रेष्ठ
८. शि. श्री टिप बहादुर लामिछाने
९. शि. श्री कर्णराज पन्त
१०. शि. श्री किशोर भट्ट
११. शि. श्री होमनाथ धिताल
१२. शि. श्री जीतेन्द्र भट्ट
१३. शि. श्री टिकाराम शर्मा
१४. शि. श्री कृष्ण कुमार श्रेष्ठ
१५. शि. श्री रमेश अंगाई
१६. शि. श्री सुमन थापा
१७. शि. श्री कृष्ण भट्ट
१८. शि. श्री वीरेन्द्र पोखरेल (भू.पू.प्र.अ.)
१९. शि. श्री टीका पोखरेल
२०. शि. श्री तेज बहादुर ढकाल
२१. शि. श्री नरनाथ मरहट्टा
२२. शि. श्री रामजी मरहट्टा
२३. शि. श्री हरि सापकोटा
२४. शि. श्री रमेश पाण्डे
२६. शि. श्री भवनाथ भट्ट
२७. शि. श्री महेन्द्र देवकोटा
२८. शि. श्री तुलसी लामिछाने
२९. शि. श्री चन बहादुर गुरुङ्ग
३०. शि. श्री मोहन प्रसाद भट्टराई
३१. शि. श्री चित्र वानिया
३२. शि. श्री पीताम्वर तिमिल्सिना
३३. शि. श्री पीताम्वर वन्जारा
३४. शि. श्री छन्द प्रसाद खनाल
३५. शि. श्री भीमसेन देवकोटा
३६. शि. श्री राजेन्द्र देवकोटा
३७. शि. श्री दिपक सिखडा
३८ शि. श्री धनन्जय यत्न
३९. शि. श्री लक्ष्मी वस्ती
४०. शि. श्री भीम वस्ती
४१. शि. श्री होमनाथ तिवारी
४२. शि. श्री जंगीलाल यादव
४३. शि. श्री उपेन्द्र राय
४४. शि. श्री इम्यानुयल राज
४५. शि. श्री मनोज कुमार वर्मा
४६. शि. श्री युताका यामाजाकी
४७. शि. श्री प्रेव स्ट्रीटर
४८. शि. श्री वावुराम अर्याल
४९. शि. श्री राम प्रसाद शर्मा
५०. शि. श्री लुमनाथ लामिछाने
५१. शि. श्री अग्नि भट्ट
५२. शि. श्री रघुनाथ धिताल
५३. शि. श्री शारदा धिताल
५४. शि. श्री जीवनाथ धिताल
५५. शि. श्री राज भट्ट
५६. शि. श्री सुदीप भट्ट
५७ शि. श्री हिरालाल श्रेष्ठ
५८. शि. श्री दुर्गा खनाल
५९. शि. राधवेन्द्र झा
६०. शि. श्री शुकदेव दवाडी
६१. शि. श्री गेहेन्द्र विष्ट
६२. शि. श्री यम प्रसाद भट्टराई
६३. शि. श्री भाइ काजी राणा
६४. शि. श्री कृष्ण काजी श्रेष्ठ
६५. शि. श्री कृष्ण घिमिरे
६६. शि. श्री मनराज वस्ती
६७. शि. श्री शिव कुमार श्रेष्ठ
६८. शि. श्री गोविन्द खनाल
६९. शि. श्री केशव वन्जारा
७०. शि. श्री प्रमे भट्ट (मसेल)
७१. शि. श्री हरि भट्ट
७२. शि. श्री प्रेम भट्ट (चौतारा)
७३. शि. श्री हरि पुडासैनी
७४. शि. श्री राजेश्वर देवकोटा
७५. शि. श्री सूर्यराज देवकोटा
७६. शि. श्री भरत अर्याल
७७. शि. श्री कलि अर्याल
७८. शि. श्री पुष्प भट्टराई
७९. शि. श्री लेखनाथ दाहाल
८०. शि. श्री कमल पाण्डे
८१. शि. श्री रामचन्द्र रेग्मी
८२. शि. श्री कृष्ण धिताल
८३ शि. श्री विजय कुमार शाह
८४. शि. श्री नवराज भट्ट
८५ शि. श्री प्रताप सिं
८६. शि. श्री प्रताप् वन्त
८७. शि. श्री श्रीधर्मानि सिं वस्नेत
८८. शि. श्री लक्ष्मी तुलाधर
९०. शि. श्री उमा श्रेष्ठ
९१. शि. श्री मातृका जोशी
९२. शि. श्री दिवाकर खड्का
९३. शि. श्री वासु अर्याल
९४. शि. श्री विष्णु खनाल

९५. शि. श्री शिव अग्गाई
९६. शि. श्री मोहन प्रसाद भट्ट
९७. शि. श्री गोवीन्द दैवकोटा
९८. शि. श्री रुद्र भट्ट
९९. शि. श्री श्रीराम पण्डित
१००. शि. श्री टीकाराम चापागाई
१०१. शि. श्री रामचन्द्र वस्ती
१०२. शि. श्री मुकुन्द भट्टराई
१०३. शि. श्री यदु अधिकारी
१०४. शि. श्री पदम वहादुर हमाल
१०५. शि. श्री रामचन्द्र सनाल
१०६. शि. श्री टुकनाथ अधिकारी
१०७. शि. श्री जनार्दन भट्टराई
१०८. शि. श्री विष्णु पुडासैनी
१०९. शि. श्री ठाकुर भट्ट
११०. शि. श्री शिव भट्ट
१११. शि. श्री गोवीन्द भट्ट
११२. शि. श्री जयकृष्ण ढकाल
११३. शि. श्री हिरामान श्रेष्ठ
११४. शि. श्री कपिल भट्टराई
११५. शि. श्री कुम्भ अंगाई
११६. शि. श्री रामचन्द्र श्रेष्ठ
११७. शि. श्री लीला घिमिरे
११८. शि. श्री रमेश भट्ट
११९. शि. श्री कालिका भट्टराई
१२०. शि. श्री कृष्ण वानिया
१२१. शि. श्री योगलक्ष्मी भट्ट

कर्मचारी तर्फ

मोतीराम भट्ट
नन्द प्रसाद
लोक व. वानिया
वावुराम पनेरु (लेखापाल)
लाल वहादुर श्रेष्ठ
नर वहादुर श्रेष्ठ

सह कार्यकलाप पक्ष

शिक्षा भनेको केवल किताबी कुरा रटाउनु मात्र होइन, किताबी ज्ञान त कोरामा मात्र सिमित रहन सक्छ । शिक्षा भनेको नै सर्वाङ्गीण पक्षको विकास गराउनु हो । बालकहरूको शारीरिक, मानसिक, बौद्धिक क्षमताको विकास र ति क्षमतालाई व्यवहारमा उतार गर्न सक्नु नै शिक्षा हो अर्थात् छोटकरीमा भन्ने हो भने आफ्नो संसारलाई राम्ररी चिन्न सक्नु नै शिक्षाको वास्तविक उपलब्धी हो । हरेक बालकको किताबी ज्ञान बाहेक उसको शारीरिक तन्दुरूस्ती, मानसिक सन्तुलन र विकास अनि बौद्धिक एवं प्राज्ञीक क्षमताको विकासमा सहयोग हुन सक्ने सह कार्यकलाप पक्ष एक अपरीहार्य पक्ष हो । खेलकूद, व्यायाम, हाजिरी-जवाफ, वक्तृत्व कला आदि यस पक्षमा पर्दछन् । हामीसंग भएको साधन र श्रोतलाई अधिकतम् परिचालन गर्दा हामीले यस पक्षमा समेत विगत वर्षहरूमा उपलब्धी लिन सकेका छौं । द्रव्य शाह रनीङ्ग शिल्डलाई लगातार ३ वर्ष जीतेर सदाको लागी हाम्रो पेवा बनाउन सक्नु, जिल्ला स्तरीय वीरेन्द्र शील्ड प्रतियोगीतामा बिविध वर्षमा बिविध स्थान लिन सक्नु, जिल्ला स्तरीय एवं क्षेत्र स्तरीय हाजीरी-जवाफ, निवन्ध, वक्तृत्व, टी., सांस्कृतिक कार्यक्रम आदिमा हाम्रो सहभागीता र धेरैमा स्थान लिन सफल हुनु हाम्रा सबल पक्षहरू रहे भने अन्तर सदनात्मक प्रतियोगीता आफ्ना आन्तरीक कार्यक्रमहरू बालकको सर्वाङ्गीण विकासमा सहयोग सिद्ध रूपमा रहे ।

अभिभावक महोदय।

उपरोक्त बिविध पक्षहरू माथिको झलकले निश्चयनै एउटा गर्व हामीलाई प्रदान गरेको छ भने अर्कोतिर हामी सन्तोषी भएर बस्ने अवस्था भने छैन । मुलुकमा प्रजातन्त्रको पूनःस्थापना भइ सकेपछि प्रजातान्त्रीक बातावरणमा जो जसले जति रचनात्मक कार्यको लागि असन्तोष लिन सक्यो उति नै प्रगती हुन्छ । खुला नीति, स्वच्छ प्रतिस्पर्धा, रचनात्मक कार्यको लागि असन्तोष, आपसी सदभाव नै प्रजातन्त्रका मर्म हुन र विकासका द्योतक पनि, आजको युग नै खुल्ला र रचनात्मक प्रतिस्पर्धाको युग भएको हुँदा शिक्षामा पनि प्रतिस्पर्धा नितान्त छ । म यस घडीमा तमाम अभिभावकज्यूहरू एवं विद्यार्थी भाई-बहिनीहरूमा के अपिल गर्न चाहन्छु भने बल्ल-तल्ल एस.एल.सी. गरेको या मेरा एस.एल.सी. को युग टरी सकेको छ किनकी कम्प्युटर प्रणालीमा युग पुगी सकेको छ। प्रतिभाशाली नागरिकको समाज र देशको लागि खाँचो भएको बखत यी कर्मलाई हामीले बेलै देखि ध्यान पु-याएनौं भने भोलीको मेरा शैक्षिक उत्पादनको व्यक्तिगत, सामाजिक भविष्य अन्यौल रहन जानेछ । अतः हामीले शैक्षिक प्रतिस्पर्धालाई पनि छिमेकी विद्यालय या जिल्ला स्थित विद्यालय या एस.एल.सी. को नतीजालाई प्रतिस्पर्धा गर्ने भन्दा भोलीको दिनमा प्रतिस्पर्धा गर्न सक्ने प्रतिभाशाली व्यक्तित्व उत्पादीत हुनुपर्छ हाम्रो दृढता यहि हो भने अर्को तिर त्यस स्थितीबाट हामी यो स्थितीमा आएका छौं भने हामीले सन्तोष गर्ने ठाउं छैन हाम्रो आर्थिक स्थिती र शैक्षिक चाहना र आवश्यकतालाई महसूस गरि घरको ढिंडो, फाँडो खाएर यहि नै उच्च शिक्षा लिन पाउने अवसर दिलाउन पर्ने दिन आइ सकेको कुरा महसूस गर्दै उच्च शिक्षाको प्रस्ताव प्रस्तुत गर्न चाहन्छु ।

विगतमा उँ नै तपाई हामी सबको चाहना, सदस्यता, चीन्तन, एकाग्रताले यस स्थितीमा आई पुगेका हौं भने इतिहासलाई सिरानी हाली अगाडी लाग्नु पर्ने खाँचो छ ।

अन्तमा, आफ्नो अमूल समयलाई पर्वाह नगरी हाम्रो आमन्त्रण स्विकार गरी उपस्थित भएर यो प्रतिवेदन सुनि दिने जुन धैर्यता प्रकट गर्नु भयो यसको लागि हार्दिक आभार प्रकट गर्दै यस विद्यालयको उत्तरोत्तर प्रगतीमा तमाम अभिभावक, शिक्षक, विद्यार्थी, स्वतदेशी तथा विदेशी संघ-संस्थाहरूबाट देखाइएको बिविध आत्मीय सहयोगको निम्ति विद्यालय सदा ऋणी छ यसको लागि हार्दिक आभार प्रकट गर्दै यस प्रतिवेदनलाई अन्तिम रूप दिन चाहन्छु ।

जय दुल्लभ।

दिनाङ्क : ०४८/१०/५

# उद्‌गार

– जनार्दन भट्‌टराई

हे दुल्लभ तिमी बाँचिरास भवमा, आनन्दको भेषले
पच्चिस वर्ष पुगी युवा तिमी भयौं, चिन्दैं रहून् शेषले
पाखा, पर्वत, कन्दराहरू सबै, यो ज्ञानको मन्त्रले
भावी दिनहरू सुशोभित बनून्, विज्ञानको तन्त्रले ॥१॥

श्रद्धाले दुई हात जोडी अरूता, दिउँ के र मैले पनि
आश्रित छु तिमी माथि राखी ममता, बस्छु छहारी मुनि ।
यो नैपाल सजाउने रहरको, बन्नु लहै साधक
पच्चिस वर्ष पुगी युवा तिमी भयौं, हट्‌ने छ लौ बाधक ॥२॥

श्रद्धाको दुई शब्द छाडी तिमीमा, कस्तो गरूँ वन्दन
तिम्रै आश्रितका अबोध शिशुमा, देउ ज्ञानको स्पन्दन
पैले दिन हैरी पुष्ट तिमी छौं, इच्छा छ के लौ अब
बाँचे है शुभकामना तिमी प्रति, दिन्छु सदा दुल्लभ ॥३॥

तिम्रो आशीकको बढेर सबमा, यो ज्ञानको दीपले
छाई मात्र रहोस् अभाव कुहिरो, निर्मूल बनून् शीपले
मागी हेर सद्रा भरोसा ममता, दिन्छौं नि हामी सब
बाँचे है शुभकामना तिमी प्रति दिन्छु सदा दुल्लभ ॥४॥

विर्सन्नौं तिमीलाई आड ममता बाँडेर लिन्छौं यहाँ
मायाँको अभिषेकको चलनले गर्नेछ डेरा यहाँ
तिम्रा शक्तिहरू फिंजारिन गई, बाँड्ने बनून् गौरव
बाँचे है शुभकामना तिमी प्रति, दिन्छु सदा दुल्लभ ॥५॥

# दुल्लभ मा.वि. तर्फ फर्केर हेर्दा

- डा. टीका पोखरेल

जब यस स्कूलको सुत्रपात २०२४ साल माघेसंक्रान्तिका दिन भयो त्यसबेला सम्म गोरखा जिल्लाको पूर्वमा आरु घाट र दक्षिण-पश्चिममा पोखरी थोक बाहेक बीच भागमा पर्ने तान्दाङ, धावा, पन्दुङ्ग, ताकु लाकुरीबोट, ताकुकोट, मसेल, बगुवा र ताप्ले आदि गाउँविकास समितिहरुलाई सेवा पु-याउने कुनै पनि निम्न माध्यमिक वा माध्यमिक स्कूलहरु थिएनन् । कुनै कुनै ठाउँमा एक-दुई वटा प्राथमिक स्कूलहरु भरखर भरखर मात्र खुलेका थिए तैपनि आमजनताहरुमा शिक्षाको महत्वबारे बोध नभएको कारणबाट ती स्कूलहरु टिकाउन अत्यन्तै गाह्रो भैरहेको थियो । तसर्थ यस दुल्लभ मा.वि. का जन्मदाताहरुले दुईवटा कुरालाई ध्यान दिए । पहिलो कुरा थियो उल्लेखित क्षेत्रभित्रका बासिन्दाहरुलाई माध्यमिक स्तर सम्मको शिक्षा हासिल गर्ने मौका प्रदान गर्नको लागि यसै क्षेत्रभित्र उपयुक्त ठाउँमा एक माध्यमिक स्कूलको व्यवस्था गर्ने र दोस्रो कुरा थियो यसरी स्कूलको व्यवस्था गर्दा तत्काल आम जनताले भित्रै देखि महशूष गरेका आवश्यकताहरुसंग गाँसेर एकिकृत रुपमा अगाडि बढाउने । फलत? यस लेखकको अध्यक्षतामा एक विकास समिति गठन भयो जसले वृहत छलफल पछि तत्काल एक माध्यमिक स्कूल, स्वास्थ्य चौकी, हुलाक र प्रहरी चौकीको एकै साथ व्यवस्था गर्दै जाने र यी सबै कुराहरु विभिन्न गाउँ समितिहरुलाई सुविधा पुग्ने गरी ध्याम्पेसालमा अवस्थित गराउने निधो ग-यो । त्यसै अनुरुप सो विकास समितिको नाउँ पनि ध्याम्पेसाल विकास समिति राखियो र उक्त समितिको सक्रियतामा तत्काल ध्याम्पेसालमा कक्षा संचालन गर्नको लागि छाहारी सम्म पनि नभएको हुनाले तारो खसे भन्ने ठाउँमा कक्षा संचालन गर्न थालियो ।

त्यति बेला तारो खसे भन्ने ठाउँमा एक प्राथमिक स्कूल संचालन भैरहेको थियो र त्यस स्कूलको आफ्नै भवन पनि तयार भैसकेको थियो । यस अतिरिक्त तारो खसेको आसपासका गाउँहरु खासगरी कुभिण्डे र आपचौरमा केही शिक्षित युवकहरु निस्की सकेका थिए । त्यसको प्रभाव गाउँका आरु मानिसहरुमा विस्तारै परिरहेको थियो र उनीहरुमा आफ्ना बालबालिकालाई पढाउन पर्ने रहेछ भन्ने भावना क्रमिक रुपमा बढदै गैरहेको थियो । तसर्थ दुल्लभ मा.वि.को सुरुआत त्यसै ठाउँबाट गर्नु त्यतिबेलाको अवस्थालाई हेदारु सर्वथा उचित थियो ।

तैपनि शुरु सुरुमा केही गाउँलेहरुबाट ठूलो विरोधको सामना गर्नु परेको थियो । उनीहरुको भनाई थियो कि स्कूलबाट एकातर्फ आर्थिक बोझको सामना गर्नुपर्ने छ भने अर्को तर्फ आफ्नो परम्परागत पेशा र आचार विचारमा प्रतिकूल प्रभाव पर्ने छ । यसले गर्दा उनीहरु उक्त स्कूल संचालित भएको देख्न चाहदैन थिए । एक दिन त समितिको बैठक चलीरहेको बेलामा केही

गाउँलेहरु हुल इज्जत गर्न समेत तम्सिएर आए तर समितिका सदस्यहरु संगको छलफल पछि अधिकांश हुल इज्जत गर्न आउने मानिसहरुको चित्त बुझ्यो र उनीहरु फर्किएर गए । यसरी उक्त स्कूल २०२६ भाद्र सम्म तारो लसै मा नै संचालन भयो र सोही साल आश्विन १ गतेबाट मात्र घ्याम्पे सालमा कक्षा संचालन हुन थाल्यो ।

त्यती वेला सम्म घ्याम्पेसाल एउटा खुला चौर थियो । तिजको दिन लाखे नचाउने र कैले काही भैंसी आहाल वसाउन लग्ने सिवाए त्यस ठाउँको अरु कुनै काममा प्रयोग भएको थिए । जव यो स्कूल संचालन हुन थाल्यो विस्तार विस्तार यो ठाउँ भरी भराउ हुँदै गयो । हाल आएर यस ठाउँमा एक छात्रावास, शिक्षक आवास, कार्यशाला भवन र एक मन्दीरको अतिरिक्त १४ कोठाहरु भएको २ स्कूल भवनमा झण्डै एक हजार विद्यार्थी अध्ययनरत छन् । त्यसै गरी एक क्षत्रिय स्वास्थ्य चौकी, प्रहरी चौकी, गोदामघर, अतिरिक्त हुलाक, साना किसान विकास आयोजनाको कार्यालय, कृषि सेवा केन्द्र, पशु सेवा केन्द्र नेपाल बैंक लि. को उपशाखा र क्षेत्रिय वन कार्यालयहरु अवस्थित छन् । यस अतिरिक्त करिव १५।१६ लाखको लागतमा १४ किलोमिटर टाढाबाट खाने पानीको आपूर्ति गरिएको छ । हाल आएर यस ठाउँमा थुप्रै निजी घरहरु वनी सकेका छन् र विस्तार विस्तार यो ठाउँ एउटा व्यापारिक केन्द्रको रुपमा पनि विकसित हुँदै गैरहेको छ ।

यसरी एउटा नाङ्गो चौरलाई हराभरा वनाएर विकासका यन्त्रहरुले सु-सज्जित वनाउनमा यस स्कूलको अग्रगामी भूमीका रहेको छ । यदि यो स्कूल यस ठाउँमा नभएको भए आज हामी यस ठाउँमा जे जती कुराहरु देखिरहेका छौं सायद ति कुराहरु देख्न पाउने थिएनौं । तसर्थ यस स्कूलले केवल परम्परागत रुपबाट पठन पाठन गर्ने काम मात्र गरेन, किन्तु त्यस परिपाटीबाट अगाडी वडेर विकासको वास्तविक वाहक बन्ने काम समेत गरी एउटा उदाहरण प्रस्तुत गरेको छ ।

यो क्रम अनन्त सम्म जारी रहने छ र हाल आएर यो स्कूल २५ वर्षको परिपक्क अवस्थामा प्रवेश गरी सकेको र यसले आफ्ना अनेकौं शिक्षित युवा युवतीहरु समेत तयार गरि सकेको हुनाले आगामी दिनहरु यसको लागि अरु प्रभावकारी हुने छन् भन्ने विश्वास गर्न सकिन्छ ।

---

*****

(कविता)

# दुल्लभ प्रति

- प्रेमचन्द्र श्रेष्ठ
थ्याम्पेसाल

दुल्लभ तिमी अब त पच्चिस वर्ष पुग्यौं
तिम्रो जवानीमा लोभ गर्ने अब धेरै होलान्
तर तिम्रा शैशव अवस्था सम्झँदा
कहिले काहीं मलाई रून मन लाग्छ

तिमीले आफ्नो शैशवावस्थामा स्याहार पाउन सकेनौ
तैपनि दु:ख र सुखसंग लड्दै भिड्दै गरेर
आफू बाँच्न विवश भयौं

तम्रो डाहा गर्नेले तिमीलाई साह्रै दु:ख दिए
तिमी माथि कडा आक्रमण समेत भए
कसैले त तिमीलाई यहाँबाट लखेट्न खोजे
तर शत्रु मात्र छैनन् तिम्रा मित्र पनि छन् यहाँ ।

तिमीलाई बँचाउन आफू नै तयार हुने
मेरा युवा साथी थुप्रैछन् यहाँ
दुल्लभ तिमी अब ढुक्क बन
यो समाजलाई राम्रो शिक्षा-दिक्षा देऊ

तिम्रो रक्षाको लागि सँधै तत्पर हुने
थुप्रै स्वाभिमानी युवाहरू छन् यहाँ
उत्तरोत्तर तिम्रो प्रगति होस्
यही मेरो तिमीलाई शुभकामना ॥

---

२०४७ सालको एस.एल.सी. परीक्षामा सम्मिलित हुने १ लाख ८४२ विद्यार्थीमध्ये:

उत्तीर्ण ४८,६५६ र
अनुत्तीर्ण ५०,९०२ भए ।

कविता)

## खाँचो छ

- होमनाथ धिताल
शिक्षक
श्री दुल्लभ माध्यमिक विद्यालय

भविष्यको उज्यालो पर्ने
वर्तमानका बालकहरू।
देशमाता हाँसेको हेर्न चाहने,
देशका कर्मठ नागरिकहरूको यहाँ खाँचो छ ।

आफ्नै पसीनामा बाँच्न चाहने
यस देशका किसान र मजदूरहरू।
चेतनाको ज्योती बाल्न खोज्ने
चेतनशील गुरुहरूको यहाँ खाँचो छ

आफ्नै शैलीले यस देशको
करखा गाउने कवि र गायकहरूको
स्वस्थ जनशक्ति तयारको लागि
सच्चा सेवक डाक्टरहरूको यहाँ खाँचो छ ।

पुल-पुलेसा, बाटो-बिजुलीको लागि
दक्ष प्राविधिक र इन्जिनियरहरूको
देश निर्माणको लागि आत्म समर्पण गर्न सक्ने
सच्चा शहीदहरूको यहाँ खाँचो छ ।

साँच्चै: खाँचै खाँचाको यहाँ
धेरै-धेरै खाँचो छ ।

---

"बडाले जो ग-यो काम हुन्छ त्यो सर्वसम्मत"

- लैखनाथ

---

"रघुकुल रीति सदा चली आई
प्राण जाई तभी वचन नजाई"
- हिन्दीका कवि तुलसीदास (रामचरीत मानसबाट)

(लेख)

# अतीतको सम्झना

- शितलकाजी श्रेष्ठ
साङ्चोक, गोरखा

भविष्यमा के कस्तो हुने हो र कुन ठाँउ कस्तो हुने हो। कसैले पनि ठीकुवा दिएर भन्न सक्दैन । २०२४ साल तिरको कुरा हो, मेरा सहपाठी साथीहरू र म भन्दा उमेरमा र शिक्षामा समेत जेठा काठमाण्डौको ठमेलमा एकै डेरामा अध्ययनको निम्ति बसेका थियौं । भदौं महिनाको तीजको दिन थियो । दाजूहरू यदु भट्ट, डा. टीका पोखरेल, हेमराज वन्त, गोपालमान श्रेष्ठ, देवेन्द भट्ट, सुरेश भट्ट, वीरेन्द पोखरेल सबै गफमा व्यस्त थियौं । त्यसैबेला यदु भट्टले ध्याम्पेसालको तीजको रमाइलो र त्यहाँ हुने मान्छेको जमघटलाई लक्षित गर्दै सबै मिलेर हाईस्कूल खोल्न पाए त्यस भेगका समस्त बासिन्दाका सन्ततीहरूको भविष्य उज्यालो हुने थियो । घरको रूखो-सुखो खाएर एस.एल.सी. पास गरेर जीवनलाई सरस बनाउन सक्थे । यो प्रस्ताव सबैलाई मन प-यो र हामी नौलो उत्साह बोकी स्कूल खोल्नको निम्ति आ-आफ्नो घर फर्कियौं । यदु प्रसाद भट्टको अध्यक्षतामा "ध्याम्पेसाल विकास समिति" नामक समिति गठन भयो । त्यस्तै कोषाध्यक्षको काम गर्ने अवसर मैले पाएँ ।

आठ वटा गा. वि. स. को बिचमा पर्ने ध्याम्पेसालमा हाईस्कूल खोल्ने अरे भन्ने सुनेपछि वरपरका बासिन्दाहरूमा खुसीको लहरले आनन्द उर्मान थाल्यो । हाल कार्यशाला भवन रहेको ठाउको जमिन सम्याएर करिव ४५ हातको लामो टहरा बनाएर अध्ययन-अध्यापन कार्य शुरू भयो । त्यतिवेला विद्यार्थीहरू चकटी, गुन्द्री आदि घरबाट ल्याएर बस्थे र बेलुका संगै लिएर जान्थे । क्रमशः विद्यार्थी संख्या बढेपछि कक्षा १ देखि ८ सम्म पढाई शुरू भयो । त्यत्तिबेला निःशुल्क अध्यापन गर्ने शिक्षकहरू निम्न अनुसार हुनुहुन्थ्यो ।

१. प्र.अ. श्री यदु प्रसाद भट्ट, तान्दाङ्ग
२. स.प्र.अ. श्री शतिलकाजी श्रेष्ठ, साङ्चोक
३. शिक्षक श्री टीकाराम शर्मा, मसेल
४. शिक्षक श्री देवेन्द्र भट्ट, मसेल
५. शिक्षक श्री सुरेश भट्ट, मसेल
६. शिक्षक श्री कृष्ण भट्ट, तान्दाङ्ग
७. शिक्षक श्री टिप बहादुर लामिछाने, पन्दुङ्ग
८. शिक्षक श्री होम बहादुर श्रेष्ठ, मसेल

अरू समयमा भने निःशुल्क आलोपालो गरेर सेवा गर्नेहरूमा रूद्र भट्ट, वीरेन्द पोखरेल, हेमराज वन्त आदि थिए । हाल श्री दुल्लभ मा.वि. रहेको जग्गा मसेल कचेपानी निवासी विर्तावाल श्री दीप वहादुर वानियाको थियो । विद्यालय निर्माण गर्ने आवश्यक जग्गाको अभाव भएकोले दीप बहादुर वानियाँले निःशुल्क करिव २२ रोपनी जग्गा दान दिनु भयो । जग्गादाता श्री दीप वहादुर वानियाँ ऐले यस संसारमा हुनुहुन्न तापनि यस भेगका बासिन्दाले उहाँको त्यागलाई विर्सनु हुन्न ।

स्कूलको संगै उहाँको नाम अमर रहेको छ । जग्गा पाएपछि नि.मा.वि. भवन बनायौं । हाम्रो लक्ष्य मा.वि. को भएको हुँदा पहिले कृष्ण देवकोटा पछि प्रेमचन्द श्रेष्ठको अध्यक्षतामा संचालक समिति गठन गरी मा.वि. तर्फ जोडतोडका साथ लाग्यौं ।

प्रेमचन्द श्रेष्ठले त्यतिबेला देखि ऐलेसम्म पनि अविच्छिन्न रूपमा विद्यालय संचालक समितिमा महत्वपूर्ण योगदान दिंदै हुनुहुन्छ । आवश्यक श्रोतको वर्गीकरण (सक्ने नसक्ने) गरेर चन्दा उठाउन थालियो । पच्चीस हजार धरौटी भवन निर्माण पछि मात्र स्वीकृति पाइने हुँदा सो पनि गरियो । हाल यो विद्यालयमा छात्रावास भवन, कार्यशाला भवन, लगायत अन्य भवनहरूले सज्जित छ र विद्यार्थी संख्या करिब १०५० छन् । यसरी अतितलाई व्यतित गर्दै आज यस विद्यालयले रजत जयन्ती मनाउन लागेको छ । यसको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

---

## ***टुक्राटाक्री***

* फ्रान्सका राजा लुई चौधौं गजबका व्यक्ति थिए । उनलाई नुहाउन पटक्कै मन लाग्दैनथ्यो । उनले जीवनभरमा स्वेच्छाले नभएर अरूको करमा परेर मात्र तीन पटक नुहाए ।

** संसारको सबभन्दा व्यस्त हिथ्रो विमानस्थल हो, जहाँ प्रतिमिनेट एउटा विमान उत्रन्छ ।

*** अमेरीकी नागरिक विलियम आर टर्वोटले विश्वविख्यात लिलामी संस्था "सुथवि" संग लिलाम बडाबडमा साँढे दस करोड तिरी आजसम्मको सबभन्दा महङ्गो पुस्तक किनेको छन् । पुस्तकको नाम "अमेरिकाका चराहरू" हो र लेखक हुन् अमेरीकी नागरिक जेम्स अड्वन ।

(कविता)

## तिमीलाई शुभकामना

- शोभा भट्ट
आई. एस. सी.
नर्सिङ्ग क्याम्पस, महाराजगंज

बुद्ध, सीता, भृकुटी जस्ता सन्तान जन्माउने,
नेपालीलाई वीर र पुरुषार्थी भनी संसारमा चिनाउने,
सहिदको आत्मालाई प्रयत्न गर्नै शान्तिमा भुलाउँन,
धन्य छ्यौ, नेपाल आमा, आत्मैदेखी तिमीलाई शुभकामना ।

बलभद्रका पालाका खुकुरीमा खिया लागेपनि,
ज्ञान हतियार कलम समाउँन त सिकाएकी तै छ्यौं,
आशातित सपना आए विपना भुलाउँन,
धन्य छ्यौ नेपाल आमा, आत्मैदेखी तिमीलाई शुभकामना ।।

उच्चतामा पु-याउने श्रृंखलाहरूलाई कासमा लिने,
उर्लँदो जलशक्ति र हरियाली छटाहरूसंग खेलिदिने,
भयौ सफल शान्तिभूमिमा विदेशीलाई भुलाउन,
धन्य छ्यौ नेपाल आमा, आत्मैदेखी तिमीलाई शुभकामना ।।।

---

(कविता)

## शिक्षकको जिन्दगी

- सुरेश पनेरु
शिक्षा क्याम्पस, गोरखा

शिक्षकको जिन्दगी कस्तो कस्तो
तलब बुझदाको दिन हङकङबाट आएको लाहुरे जस्तो
ऋण तिर्दाको दिन जुवामा हारेको जुवाडि जस्तो
अनुहारतिर हेर्दा टी.बी.ले चुसेको बिरामी जस्तो
शिक्षकको जिन्दगी कस्तो-कस्तो
जति खाए पनि पेट खुम्चिए जस्तो
उही सडक व्यापारीज्यूको थैला थोत्रिए जस्तो
शिक्षाको जिन्दगी कस्तो-कस्तो

---

(कविता)

## दुल्लभ तिमीलाई शुभकामना

- जैनी प्रधान, कक्षा १०
श्री दुल्लभ मा. वि.

अँध्यारो औंशीको रातलाई
पूर्णिमा जस्तो बनेर उजिल्याउन सक

अज्ञानीको हृदयमा रहेको निष्पट्ट कुहिरोलाई
ज्ञानको ज्योतिले मूलोच्छेदन गर्न सक

भूत देखि भविष्यसम्म
शिक्षाको ज्योति फिंजाउन सक
सगरमाथा जस्तै दृढ बनेर प्रकाश छर्न सक
दुल्लभ तिमीलाई मेरो यही शुभकामना

---

महाभारतलाई नेपाली भाषामा पहिलो पल्ट अनुवाद गर्ने व्यक्ति
आशुकवि शम्भु प्रसाद ढुङ्गेल हुन् ।

# चस्मा (हाँस्यव्यङ्ग)

नवराज भट्ट

चस्मा नदेख्ने र नचिन्ने मानिस यस दुनियाँमा नामेठ नै छन् । सकेत अरूको मागेर भने पनि वेला वेखतमा आफ्नो नजरमा सँधैले घुसारेकै होलान् । यसको पनि यस दुनियाँमा कम महत्व छैन किनकी चस्मा मानिसको भडकिलो र भलाडमीपनको सूचक हो । चस्मा भनेर मात्रै कहाँ एकै हुन्छ र सेतो चस्मा, कालो चस्मा (सीतली चस्मा) चेन्जेवल चस्मा गान्धी चस्मा आदि । आदि ।

गान्धीं चस्मा त गांन्धीसंग संगै सती गई सके । कुनै कुनै गान्धीका सिन्दुर पहिरेका तर गान्धी भक्ति नभएका, सति जान नर्सने भने कतै कतै छन् । पतिभक्ति नभएका र बुढी भइसकेकोले तिनीहरूको पनि के महिमा? घामसंग तर्सने तर छाता लिएर हिड्न अफ्ठ्यारो मान्ने, जागीरे र पंक दुनियामा त चेन्जेवल चस्माको पनि कम स्थान छैन । स्थान भएर पनि चेन्जेवल र गान्धी चस्माको स्थान अल्पमतमै छ । अल्पमतको पनि कदर गरिने भएकोले यस दुनियाले यी चस्मा नविर्सेका होलान् । प्रतिद्वन्दिको रूपमा त सितली चस्मा र सेतो चस्माको नै स्थान आउंछ । मतदानवाट मात्रै यी दुइको महिमा या वाहुल्यता छुट्याउन वाँकी छ ।

कालो चस्माको पहिरनमा जो कपाल र काखी रौंमा अत्तर दलेर फिल्टर चुरोटलाई ग्यास लाइटरले सल्काउंदै काँधमा रेडियो भिरेर फुल पावरमा धन्काउंदै शहरको दायाँवायाँ हेर्दै हिड्छन् । होटलका होटलनी उसलाई आफ्नो होटलमा एक रात मात्र राख्न सडकमानै भोला भम्टन पुग्दछन । होटलनीको विचारमा नै पैसा खर्च गर्न नडराउंने मानिसको रूपमा तिनीहरू प्रतिविम्वित हुन्छन् । यस्तो आदरमात्रै यसले वटुल्ने हो र? आँखा विग्रेका केटाकेटीको पनि दाम्पत्य जीवनको सम्वन्ध जोड्ने काम गर्छ । अभ्र, विहेमा व्याहुलोले आँखा छोपी व्याहुलीको अनुहार हेर्न, आँखा पाक्दा र घाममा जोत्दात यसको महिमा कति कति? कालो चस्मेदाहरू यसमा म दामा पार्गी छु नरिसाउनु होला, मैले यहाँहरूको पदामा जनमत वटुल्न सहयोग गरेको हुं ।

मानिसको विचमा सभा समारोह, न्यूरोडको पीपलको बोट, सिंहदरवारको गेट या कुनै मन्त्रालयको गेटजस्तो महत्वपूर्ण स्थानहरूमा लवेदा सुरुवालको पहिरनमा सुनमाथी सुगन्ध दिने सेतो चस्मा लगाएर वसेपछी दुनियाँको नमस्कार कति खाने? नमस्कार पनि साधारण हो र? धनुष्टंकार नमस्कार । वर्षौं-वर्ष सम्म घुंडाको खाला फालेर ज्ञान आर्जन गरेका ती विद्वानको व्यक्तित्व पनि सेतो चस्मेदार मानिसको सामूमा पहिचान नगरेसम्म विलिन हुन पुग्छ । मन्त्रालयका सचिव, कम्पनीका जी.एम. को नजिकै वसेका सेता चस्मादार पि.ए उनै सचिव र जी.एम कै सामुमा दुनियाको नमस्कार र भेटी पाउंछन् । विचरा! ति सचिव र जी.एमको के भाउं? सडकको पेटीमा त्यो युवक टाई, सर्ट, पेन्टको पहिरनमा चस्मा लगाएर हेण्ड व्याग लिइ हिडेको देखे दुनियाले उसको मुखमा नहेरी छोड्ला र? अभ्र अल्प विकसित देशमा त केटीको सेतो चस्मा पहिरनलाई भन महत्व दिइएको पाइन्छ । ती केटी चस्माको पहिरनमा विदेशी पोशाक या मलमले साडी काँधमा राखी हिड्ने हो भने, दुनिया कड्के आँखाले भने पनि नहेरी छाड्दछ र । संकेत युवकनै प-यो भने, पीछा पनि लाग्गी छाड्ला । वेलावखत कसैले चस्म लगाएको कारण खोधेपनि, सेतो चस्मे दुनिया आँखा कमजोर भएको र टाउको दुखेको कुरा गर्दै आवश्यकताको पुष्टी दिन्छन् । यस जमानामा डाक्टर साहेवहरू पनि के खोजछन् कानु? आँखो । भन्ने भैं दुनियाँको माग अनुसार चस्मानै लगाउंने अडर दिन्छन् । धन्य छ डाक्टर साहेव । धन्य छ म पनि सेतो चस्मे मतदान नजिकै आउंदै छ । यो म बाट दिएका केही जनमत वटुल्ने वलिया तर्क हुन । आरु खोज्ने कोशिश म पनि गर्दछु । यहाँको पनि प्रयास नरोकियोस् ।

(कविता)

# संसारदेखि किन दूर दीप

- कृष्ण बहादुर बानियाँ
शिक्षक, श्री दुल्लभ मा.वि.

तिम्रै छहारी लिई काखी च्यापी
विज्ञानको देन लिएर ढाकी
लिंदै रहेछन् खुब संग शीप
संसार देखि किन दूर दीप ॥१॥

संसार सागर सब तोडी नाता
भोग्दै किरण छन् सब जाती-जात
भन्छौं तिमीले अरु ज्ञान दीप
संसार देखि किन दूर दीप ॥२॥

जहाँ छ स्कूल चुचुरो उज्यालो
बढ्दैछ माथि नझुकाई भाल
जमिन दिएछौं खुब सोची दान
अमर रहे दीप तिमी महान ॥३॥

नर्फकने मार्ग तिमी गएछौं
पिता सबैका अमरै भएछौं
तिम्रै महादान जमिन वाली
खेल्छन् यहाँ शैशवले निराली ॥४॥

आखिर दिउँ के तिमीलाई फेरी
बुझाउनु मन् तल माथि हेरि
भन्दै सबै छन् दीप हो नि सन्त
आशीक दिए है तिमीले अनन्त ॥५॥

---

शान्ति तरवारको जोडले आउँदैन, प्रेमको जोडले आउँछ । प्रेम भन्दा ठूलो वस्तु यस संसारमा अरु छैन ।

- महात्मा गान्धी

## दुल्लभ प्रति

- गोविन्द भट्टराई
मसेल - ७

कस्तो अनौठो विचित्र तिमी छौ
सँधै एकनासरसँग बसिरहेछौ
तिम्रा ती यौवन रूपी समुदहरूले
मानिसलाई आकर्षण गर्छ जोडले ॥१॥

पहिला तिमी थियौ एक श्मसान घाट
ऐले तिमी भयौ शिक्षाको पवित्र फाँट
तिम्रा ती शैल भूमिमा अति गर्व राखी
शिक्षा र शास्त्र अनि शिर माथि ॥२॥

जति छन् भोका शिक्षा र ज्ञानमा
आकर्षण गर्छौ तिमी एक शानमा
हे दुल्लभ सँधै प्रगति पथमा जाऊ
आफ्ना ती बच्चाहरूलाई बचाऊ ॥३॥

*****

---

## तीन छेस्का

- ढकनाथ वस्तकोटी
शिक्षक,श्री वालकल्याण प्रा.वि., मसेल

विधालय। देशको भाग्य रेखा
चम्काउने परेवा पाखा
सदाचारको केन्द ॥१॥

शिक्षक। गौरवपूर्ण धरोहर
शिक्षा दिक्षाको खानी
सँधै सँधै सोचिरहने
चिन्तनशील प्राणी ॥२॥

विधार्थी। सबैका आशामुखी
सबैका आधार
देशको भाग्य बोकेका
भविष्यका कर्णधार ॥३॥

---

विश्वमा सबभन्दा ठूलो र पुरानो अस्पताल
अमेरिकामा छ, जस्मा ५६०० शैय्या छन् ।

# गोर्खालीको सम्बन्धमा

- नारायण प्र. बोहरा
मसैल

इतिहास मानव जातीको साझा उत्थान, पतन, संघर्ष, शान्ति, युद्ध र सम्झौताको माला हो । मानव इतिहासका माला हाम्रा पूर्खाको कमाई हो । हामी बाँच्दछौं, जिउँदछौं आफ्नै संस्कृति संस्कारमा रूमलिन्छौं । पराईको त्यान्दो पनि बुझ्ने प्रयास गर्छौं । हामीलाई इतिहास आफैमा बोध छ । कसैको वहादुर वीर गाथा सापटी लिनु पर्दैन । आफ्नो इतिहासको सम्बा निर्माण गरिरहेका छौं । यो जाती पहाडी कन्दरामा हुर्केर भव्य विशाल भूमीमा आफ्नो परिचय दिन पछि हटेको इतिहासमा नलेखिने हाम्रो गौरव र सौभाग्यको पहिचान हो ।

सभ्यता मानव जातीको पूर्वाधान हो । इतिहास स्वभावको जननी हो । हामी भौतिकमा मात्र विश्वास गर्दैनौं । आध्यात्मिकता पनि हाम्रो रिवाज हो । वंशजलाई चिनाउन कैही दफाले सम्भव हुँदैन । पुनः महाभारतको जन्म हुन्छ । लहड र तरंगको वाजीमा इतिहासको खोजखवर सम्पूर्ण नपाए पनि गोर्खालीको इतिहास र शाहसले कैजरको मुट्ठमा ठ्याङ्ग्रो ठोक्यो । हाम्रा वीर देशभक्ति र देश प्रेममा चुर्लुम्व डुबेका पुर्खाले कसैको सामु झुकेनन्, विदेशको स्याउलाई लत्याएर स्वदेशको भोगटे, विदेशको साग भन्दा मातृभूमीको सिस्नु खाए, चन्द सम्शेरको थिचाईमा पर्दा पनि जर्मनीको भनाईमा नाचेनन् । केवल देशप्रेमले ओतप्रोतयुक्त गाथा गाए । त्यसैले त सगरमाथा भन्दा वीर गोर्खालीको आत्मा उपर भएर बाँच्न सकेको छ ।

आज दुनियाँमा अर्कै युगले प्रवेश ग-यो । हाम्रो संस्कार कायम हुन सकेन । जहाँ हाम्रो पुर्खाले ज्ञानको खोजमा आफू तल्लीन रहेका थिए । फिरिङ्गेलाई हारको स्वाद श्रीगणेश गराएका थिए । बाबा गोरखनाथको समेत पुण्यभूमी रहेको गोरखा आफ्नै इतिहासमा बाँच्न चाहन्छ । गोर्खा भौतिक र नैतिक जगतमा पछाडी धकेलिनु नेपाली वर्गमा दाग लाग्नु सरह हो । कैयौं डाँडा पाखाले काँचुली फेरी सके, उलट-पुलट भईसक्यो । असभ्य सभ्यमा परिणत भई सके तर आजत्यही देश नेपाललाई बताउन गोर्खाको पहिलो परिचय नगराई धरै नपाउने कालीको वासस्थान नीलो र अनौठोमा परिणत भयो ।

हामीलाई लाग्दछ, हाम्रा सन्तती अन्योलमा पर्लान्, हाम्रो पूर्वज विलीना गर्दा हुन् । हाम्रो परिश्रम ऋषिमुनीका शिक्षा, सवका सव एक-एक गरी बिलाउँदै छन् । बिचरा दुनियाँलाई के थाहा? आजका बेलायती शिक्षाले युक्त भएका दार्शनिकको आत्माले गोर्खा चिनेन । एक चमकदार खुकुरीको भरमा तोपका गोला छेकिन्थे । एक शब्दमा सारा विश्व थर्कन्थ्यो ।

हामी गोर्खाली, इतिहासमा गौरव राख्दछौं, हामीसंग यो पूण्यभूमी बाँचीरहेको छ, बाँची रहोस भन्ने अमर कामना गर्नु र कर्तव्यको पथमा लम्कनु हामी समस्त नेपालीको जिम्मेवारी हो ।

(कविता)

# एक सम्बोधन कल्लाई

- अमृत भट्टराई
बगुवा, गोरखा

झूटो हैन कुनै रहस्य रहने आनन्द जादुगरी
साँचो भन्न अवस्य हुन्न दिलमा ज्यादै अँध्यारो गरी
एक्लै चल्नु रिँगाउँदै जगत यो, एकान्त आँखा भरि
छातीभित्र लुकाइने असजिला, अज्ञान भाषा सरी ॥१॥

बेग्लै लोक छ सिर्जना नगरमा, भित्री कुनै शाश्वत
छाया साम्य छ कल्पना लहडिला, आनन्दका सुन्दर
को हो कुक्कुक् कोइली हृदयकै, उद्यानमा गाउँछ
चोखो सृष्टि गरी कुनै प्रहरमा आफैं छिपायौ कि त? ॥२॥

तिम्रै गीत सुनेर कल्कल यहाँ, स्वप्ना बनी बोल्छु म
आँखामा रंगभूमि खेल्छ दिलमा, गोदावरी फुल्छु म
दुखी निर्झरका सुदिव्य रसिला, संगितमा भुल्छु म
सारा मानिसको कठोर मुटुमा माँया बनी चुम्छु म ॥३॥

ए नौली सुन सुन्दरी प्रणयको पोल्टो फुकाऊ नयाँ
आफ्ना शील्प सजीवता, मधुरता आफैं बनून् सिर्जना
यस्तै आँगन, गोठ, खेत दुःखका यी गाउँ वेसी भरि
यस्तै जीर्ण कुटी पराल खरका, छाना मुनि हुन्छ म ॥४॥

ढुङ्गालाई बनाउँला म दिलको आस्था थपी देवता
नाङ्गालाई लुकाउला कलमले, खास्टो मुनि वेपत्ता
भोकालाई खुवाउला प्रकृतिका चोखा, मीठा भावना
बच्चालाई फुल्याउँला म रसीला, गर्दै नयाँ कल्पना ॥५॥

---

(कविता)

# हाम्रो धर्म हाम्रो जीवन

– पं. नारायण पोखरेल
वगुवा, गोरखा

विहान सूर्योदय हुन्छ हुन्छ
प्रकाशले सिर्जना खुन्छ खुन्छ
यो सृष्टिमा जीवन वन्छ वन्छ
स्वधर्म त्यो जीवन लिन्छ लिन्छ ॥१॥

पशुत्वनै हो पशुको स्वधर्म
मनुष्यमा मानिसको स्वधर्म
दुवै रहन्नन् नरहे स्वधर्म
तसर्थ हो जीवननै स्वधर्म ॥२॥

पशुत्व देखि पशु वाहिरिन्न
मनुष्यताको छ पदार्थ भिन्न
मनुष्य हो चेतनशील प्राणी
कोही छ वक्ने यस भित्र वाणी ॥३॥

मनुष्यले भन्छ मनुष्यता त
मनुष्यलाई सम देख्नुमा छ
संस्कार जस्तो थरिको रहन्छ
मनुष्यता त्यै अनुरूप हुन्छ ॥४॥

सौन्दर्य मारे सुख पाईदैन
नपाइए हिन्दूपना हुँदैन
सौन्दर्य हाम्रो शिव सत्य मात्र
त्यसै हुँदा छौं सब पूर्ण पात्र ॥५॥

---

(कविता)

# विद्यार्थी

- जयकृष्ण ढकाल
शिक्षक, श्री दुल्लभ मा.वि.

१

उद्देश्य के हो सुवर्सग जान
कर्तव्य छाडे झुकिजान्छ शान
कर्तव्य छाडे पनि हुन्छ एक
रहन्न हामीहरूमा विवेक

२

आचार के हो सुवर्सग हेर
विनेर मौका गर काम धेर
बनेर छाड्नु नयपाल दीप
मौका छँदैमा बटुलेर शीप

३

कर्तव्य आशा अनि आफू देखि
विवेक थुपारे नगरेर शेखी
मौका छँदैमा सुव होस राख
बढ्नेछ तिम्रो अनि मात्र शाख

---

(कविता)

# दुल्लभ प्रति

- तेज वहादुर श्रेष्ठ 'अभागी'
रिठ्ठैपानी, गोरखा

पाँच वर्षको थिए म
त्यहिबेला देखि
ऐले दुल्लभको कासमा
ज्ञानको पहिलो अक्षर
सिकेकै मैले दुल्लभमा ।

गुरुहरुको असीमित माया
अटूट पाएथें
अरु केही हैन दुल्लभसंग
ज्ञान नै मागे थें ।

गुरुहरुको प्रयासबाट मैले
यी अक्षर कोर्न सकें
ज्ञान नै ठूली भनेर
अरुलाई सिकाउन सकें

हे दुल्लभ तिमीले देशभक्त बनायौ
सबैलाई प्रेमगर्न तिमीले सिकायौ
सत्यमा बोल्न निडर बनायौ

त्यसैले दुल्लभलाई धन्यवाद
गुरुहरुलाई सादर नमस्कार
दुल्लभ फुलि रहोस
आभारी दुल्लभ प्रति

मुरी मुरी शुभकामना। शुभकामना।। शुभकामना।।।

# म र मेरो व्यवसाय

- टुक नाथ अधिकारी

यस अपूर्व वरदान प्राप्त धर्तीमा अनेक जात जातीका प्राणीहरूको सृष्टि विकास र अन्त्य भईरहेको हामीहरूलाई स्पष्ट भई रासेकै कुरा हो । यसै धर्तीमा जन्म लिने बिभिन्न प्रकारका प्राणीहरूमध्ये एक उत्कृष्ट ठहरिने प्राणी मानिस गनिन गएको छ । यसै वर्गमा जन्मिएको प्राणीमध्ये म पनि एक हुन पुगेको छु ।

मेरो कार्य क्षेत्र निकै फराकिलो हुँदा हुँदै पनि विधि र विडम्बनाको कारण भनौं या आफ्नै स्वविवेकको खेल भनौ निकै साँघुरिएको कुरा मलाई धेरै काल पछि मात्र महशुस हुन्छ । म किन यसरी एक ज्यादै साँघुरो घेरा भएको क्षेत्र प्रति आश्रित हुन पुगें । यदाकदा मलाई लाग्छ यो भन्दा पवित्र व्यवसाय हरू हुन दुर्लभ छ । शायद यो सोचाई पनि मेरो कमजोर आत्माको सोचाई होला । तर पनि मलाई यो श्रमले यति मन लुटेको छ जसलाई परित्याग गरेर म क्षण भर पनि रहन सक्दिन अझै यस प्रति समय दिनु छ र अझै केही गर्नु छ म सोच्दै जान्छु ।

जब मैले यो व्यवसाय स्वीकारे त्यस समय म गलत बाटोमा नै हिंडेको हुँ जस्तो त लाग्दैनथ्यो, तर धेरै इष्टमित्र भन्थे बाटो गलत छ, धेरै साथीभाई त्यसै भन्थे । केवल पाँचै औंलाले भ्याउने मात्र भन्थे बाटो ठिक छ । मलाई लाग्थ्यो पछिल्ला हारका जो छन तिनै ठीक छन् । वास्तवमा यी पछिल्ला वर्गका सहयोगीको समर्थनमा मैले धेरै काल बिताएँ । मैले परिवारको वास्ता गरिन सेवालाई वास्ता गरे, दुःसलाई वास्ता गरिन सन्तोषलाई गरे ।

तर, सन्तोष मिलेन भिनभने म सेवा गर्छु भन्थे तर मेरा सेवालाई कसैले सस्तो मान्यता चुकाउँदैन । मेरो कार्यस्थल र साधन थियो केवल एक नदी र डुङ्गा अनि साध्य थिए त्यसमा वारपार गर्ने बटुवा । जब म ती यात्रुहरूलाई वारपार गराउने उमेद राख्थे । म मा विभिन्न व्यवधानहरू आई पर्थे ती मध्ये म र मेरो व्यवसायलाई पिरोल्ने र यात्रुहरूलाई सन्तोष दिलाउन बाधा पु-याउने व्यवधानहरू थिए मेरो वरिपरि रहेका लुती, वालतोड अनि पिलीका जिवाणुहरू । यी जिवाणुहरूले मलाई वेला-वेलामा सताईरहेका हुन्थे । कहिलेकाँही लुती आउथ्यो - सताउथ्यो । म अलि आतिन्थे अनि होशियार हुन्थे अनि नुहाउने र स्क्याविन लगाउँथे । कहिले मलाई वालतोड देखिन्थ्यो, मुख पाक्थ्यो, निचोर्थें र फाल्थे । केही समय उपचार हुन्थ्यो अनि कहिले त ठूले पिली देखा पर्थ्यो अनि म निकै हतासिन्थे । अनि दुख्थ्यो-खप्थें, सहन्थें । तर कहिलेकाँही त क्याप्सुल पनि खान्थे, तर पनि निको हुन समय लाग्थ्यो अनि मलाई शोक चल्थ्यो - के म अपरेशन नै गरौं तर म सोँच्थे, म अपरेशन नै गरेर ओच्छ्यानमा पर्दा बटुवाको चाला के होला? यही सोचाईले हो कि किन हो, ती जीवाणुले मलाई न मर्न दिएका थिए न आराम हुन । न त्यो डुङ्गा भन्दा अरू नै कार्यको बाटो अगाल्न ।

(कविता)

## सेवा गर्नु छ मलाई

- प्रेम बहादुर कार्की
प्रहरी हवल्दार
प्रहरी चौकी ध्याम्पेसाल

जन्म दिने माता-पिता, शिक्षा दिने गुरु
चाड र पर्व कुनैको फिक्री नगरी
देश र नरेशको सेवा गर्नु छ मलाई

प्रत्येक हिमशिखर अनि श्रृंखलाको माझमा
तराईका फाँट र पहाडका कन्दराहरुमा उभिई
हर निमेष सोचेर देश र जनताको भलाई

शान्तिका सप्तरंगी ध्वजाहरु फहराएर
प्रत्येक नेपालीमा आत्मविश्वास जगाएर
शान्तिको रंग छर्दै शान्ति दीप जलाई
शहर देखि कुनाकाप्चा सेवा गर्नु छ मलाई

भोक निद्रा जाडो अनि घाममा पनि
सोजीनिती गर्नु पर्छ अशान्त छ कि भनी
सुरक्षा चैनका लागि यी पाखुरी अनि पाइला चलाई
सदा पवित्र बचन र मन्त्रले सेवा गर्नु छ मलाई

यी सबै कुरा मलाई थाहा हुन्थ्यो । सोच्दै जान्थे तर सोचाई, सोचाई नै रहिरहन्थ्यो । उज्याली हुन्थ्यो उही डुङ्गा उही घाट र उस्तै पोके डोके यात्रु । दुःखको कुरा त के भनी यी सबै कुरा स्पष्ट हुँदा हुँदै पनि मैले यो व्यवसाय परित्याग गर्न भने सकिन यसैमा धेरैकाल बितिसक्यो अन्त्र अर्को बाटो अंगालेको छैन । यही नै मलाई कुवाको भ्यागुती जस्तो अनुभव भईरहेको छ । यही नै मेरो फूल र भमरा भई रहेको छ । त्यही पोके र डोकेहरू आउँछन् जान्छन् मेरो कार्य कुशलताको टिप्पणी गर्छन् । आवश्यकता मात्र महशुस गर्छन । तीनिसंग पनि कहिलेकाही मेरो चित्त दुख्छ किनभने तिनीहरू जानी नजानी कहिले काही मलाई सताउँछन् । यस त्यसलाई वास्ता गर्दिन किन भने म वोटै नै भए । तिनीहरू बटुवा नै भए आउँछन् जान्छन् मसंग वस्ने र कुरा गर्ने ती संग समय पो कहाँ छ र जति म संग समय बिताउँछन् उति समयले उनीहरूलाइए हतार गरिरहेको हुन्छ । त्यसैले कोही चित्त बुझाएर जान्छन् त कोही त्यसै जान्छन् । त्यसमा कोही शत्रु वने जस्तो र मित्रु बने जस्तो महशुस हुँदैन किनभने मेरो श्रम उही ।

मेरो यात्रुहरू यस्तो गर्छन जान्छन् । टाढा पुग्छन् कोही राष्ट्रपति त कोही डाक्टर, कोही पाईलट त कोही इन्जिनियर, कोही महात्मा त कोही महात्मा गाँन्धीको अनुयायी, तर मेरो लुतो, वालतोड र पिलोको जीवाणु जस्ताको त्यस्तै अनि म उस्ताको उस्तै ।

---

(कविता)

# दुल्लभ अमर वन

- यदु कुमार लामिछाने
कक्षा १०, श्री दुल्लभ मा.वि.

दुल्लभ तिमी अनन्तसम्म अमर बन्न सक
शिक्षा र विवेकको ज्योति फिंजाउँदै
भविष्यमा अझ अगाडि बढ्न सक
दुल्लभ ...

जीवनयात्रामा आइपर्ने चुनौतीहरूलाई
निडर भएर धपाउन सक र
भविष्यमा अझ अगाडि बढ्न सक
दुल्लभ ...

---

## ठट्यौली

अध्यापकः रमेश यदि तिमी आफ्नो वरिपरिको भीड हटाउन प-यो भने के गर्छौ?
रमेशः सर। म चन्दा माग्न शुरू गर्छु ।

---

(सामयिक चर्चा)

# अस्पतालको प्रारम्भ कसरी भयो?

– संकलक

अस्पताल यस्तो संस्था हो, जहाँ रोगीहरूको उपचार हुन्छ । तर अस्पतालको प्रारम्भ कसरी भयो यो कुरा कमै मान्छेलाई थाहा छ ।

इतिहासको अध्ययनबाट ईशाभन्दा ४३० वर्ष पूर्व श्रीलंकामा अस्पता थिए । भारतमा सम्राट अशोकले ईशापूर्व तेश्रो शताब्दीमा १८ वटा अस्पताल निर्माण गरेका थिए । यूनानी र रोमन सभ्यतामा पूजाघरलाई अस्पतालको रूपमा प्रयोग गरिन्थ्यो । इशाई धर्मले अस्पताल स्थापनार्थ धेरै प्रोत्साहन दिएको छ । पुरानो समयमा अस्पताल इशाईहरूको धर्मस्थानको अनिवार्य अंग बनेका थिए । मध्ययुगमा अस्पतालको स्थापना एउटा धार्मिक कार्य मानिन्थ्यो ।

१९औं शताब्दीमा आधुनिक अस्पतालको विकाशमा तीन जनाको महत्वपूर्ण स्थान छ । ती हुन्ः फ्लोरेन्स लाइटिंगल, लुई पाश्चर र लर्ड लिस्टर । फ्लोरेन्सलेनै नर्स पेशालाई वैज्ञानिक र मान्यता प्राप्त रूप दिइन् ।

उत्तरी अमेरिकाको पहिलो अस्पताल मेक्सीको शहरमा सन् १५२४ मा कोरटेज नामक व्यक्तिले स्थापना गरेका हुन् । फ्रान्सेलीले सन् १६३९ मा क्यानाडाको क्यूवेक शहरमा प्रथम अस्पताल बनाए । आज त विश्वमा रोग अनुसारका छुट्टाछुट्टै अस्पतालहरू प्रशस्तै छन् । संसारको सबै भन्दा ठूलो अस्पताल शिकागो (अमेरिकाको) "डिस्ट्रिक्ट मेडिकल सेण्टर" हो । यसमा ५,६०० बिरामीको निम्ति शैय्याको प्रबन्ध छ । नेपालको पुरानो र ठूलो अस्पताल वीर अस्पताल हो ।

---

# यी समुद्रका नाम कसरी जुरे

मृत सागर - जसलाई "डेड सी" भनिन्छ, त्यसको पानी निकै नुनिलो छ । नुनीलो पानी भएकोले त्यसमा समुद्री झार-पात र जीव कमै पाइन्छन् । त्यसै कारणले पनि यसलाई मृत सागर भनिएको हो ।

लाल सागर - समुद्र भित्रका झार-पात, जीवजन्तु, बालुवा र पानी समेत रातो देखिने भएकोले यसलाई लाल सागर भनिएको हो ।

श्वेत सागर - सोभियत संघको उत्तरी भागमा एउटा समुद्र छ जहाँ सँधै हिउँले ढाकेको देखिन्छ । त्यसकारण यसको नामनै "ह्वाइट सी" राखिएको छ ।

पीत सागर - "एलो सी" मा मिसिन आउने सबै नदीले पहेंलो लेदो ल्याउने र त्यही लेदोको कारण पानी पहेंलो हुने गरेकोले यसलाई एलो सी भन्दछन् ।

कृष्ण सागर - युरोप र अमेरिका बीचमा पींध कालो भएकोले पानी समेत कालो देखिने समुद्र छ । विषालु हाइड्रोजन ग्यासले गर्दा पींध कालो भएकोले त्यस समुद्रलाई कृष्ण सागर "ब्ल्याक सी" भनिन्छ ।

यसरी यिनीहरूको स्वभाव र स्वरूप अनुसार नै वैज्ञानिकहरुले नाम राखेको तथ्य थाहा लाग्छ ।

(कविता)

# बिताए छौं पच्चिसको वसन्त

- कालिका भट्टराई
शिक्षक, श्री दुल्लभ मा.वि.

सानो तिमी थ्यौं दुःख कष्ट पाई
ग-यौ यहां आश्रीतको भलाइ
बन्दै गरे है सबमा अनन्त
बिताएछौं पच्चिसको वसन्त ॥१॥

चुनौती बाधाहरूलाई तोडी
नानीहरूको मनलाई गोडी
समान तिम्रा अरू कोही छन् त।
बिताएछौं पच्चिसको वसन्त ॥२॥

छोडेर वालक-वय सन्धिलाई
आशा सुनौलो सबमा फिंजाई
तेजस्वी आँटी तिमी तुल्य सन्त
बिताएछौं पच्चिसको वसन्त ॥३॥

भोगेर आफू दुःखको भकारी
बढेर जाओस् सुखको छहारी
भन्छौं नि यसमा खुशी हुन्छ मन्त
बिताएछौं पच्चिसको वसन्त ॥४॥

युवा तिमी छौं सब हामी साथी
पु-याउँछौं काँध दिएर माथि
टेवा दिनेछौं किन हेर्नु अन्त
बिताएछौं पच्चिसको वसन्त ॥५॥

आतंक छोडे तिमी माथि धेर
चिन्यौ चिनाए अरू बाँकी के र।
बनून् ती तिम्रा सब शत्रु कन्त
बिताएछौं पच्चिसको वसन्त ॥६॥

दुल्लभ बढे हैं अरुमाथि धेर
आपत्तिका ती दिनलाई हेर
भन्छु सदा नै बन है अनन्त
बिताएछौं पच्चिसको वसन्त ॥७॥

सके भरिमा दिउँला नि साथ
गर्नेछु आदर निहुराई माथ
गर्नेछु श्रद्धा तिमी मानी सन्त
बिताएछौं पच्चिसको वसन्त ॥८॥

## दुल्लभ

- सूर्य देवी सिंखडा
कक्षा १०, श्री दुल्लभ मा.वि.

दु- दूरमा रहेर पनि तिमी शिक्षाको उज्यालोमा चम्कि रहेछौं
अशिक्षित पिढीलाई आलोकित गरि रहेछौं ।

ल- लक्ष्य एउटै लिएर धरतीमा उभि रहेछौं
उपासक बनी शिक्षाको बिगुल फुकी रहेछौं ।

ल- लक्ष्य यतिमात्र होइन
तिमी विश्वमा चिनिन खोजी रहेछौं ।

भ- भद्र तालले सगरमाथा जस्तै रहेका छौं
अरुको रिस, सहारा नभै
आफ्नै अस्तित्वमा बाँचेका छौं
"दुल्लभ, तिमीलाई बन्दना"

## शुभकामना दुल्लभ तिमीलाई

- चमेली पोखरेल
गोरखा क्याम्पस, गोरखा

धन्य हौं दुल्लभ बत्तीको काम तिमीले गर्दछौं
यो कन्चा हाम्रो मानव शिर गर्वले भर्दछौं
तिम्रो त्यो देन, तिम्रो त्यो नाम बिर्सन्नौं कहिले
अनन्तसम्म छरेर बस रूप त्यो अहिले

तिमी उत्तरोत्तर बढ्न सक
शिर उचा राख्न सक
तिम्रो उन्नतिको कामना
हृदय देखि बन्दना ।

---

"यतो धर्मस्ततो जय"

- नीति वचन

(कथा)

# बेदना

- मीन प्रसाद भट्टराई
वडा नं. ७ मसेल, गोरखा

दशैंको बेला थियो ।

सर्वत्र आनन्द र खुशीका लहरहरू क्रमशः बढिरहेको देखिन्थ्यो, अमीर, फकीर सबै आ-आफ्नो स्थिति अनुरूप दशैंको तयारीमा व्यस्त थिए । दशैं नजीकै आइसक्दा पनि यस पटक प्रकृतिको सुन्दरतामा भने केही बेलीनउँ लाग्थ्यो, किनकी पानी फर-फर परिरहेथ्यो, शरद् ऋतुमा हुने सफेदता नभएकोले भित्रैदेखि अलि मन भने सन्तुष्ट थिएन - तर प्रकृतिको नियम, दशैं पनि शुरू भएथ्यो प्राकृतिक मनमोहक सुन्दर छटा देखिन थाल्यो कस्तो आनन्द । आकाश सफेद, नीलमणि जस्तै, सम्पूर्ण क्षितिज सफेद, आकाश र डांडाहरूको प्रगाढ अन्तर्सबन्ध बाँधिएको, हिलो-मैलो सबै जादुगरी झैं विलाए । प्रकृति साँच्चै सुन्दर देखियो । जस्तै खिन्न मन पनि यो अवस्था देखेपछि खुशी हुन करै लाग्थ्यो ।

गाउँघरतिर आफूसंग नभएको चिजबिज खोजमेल गर्न पनि गाह्रो । न सोमवारे हाट, न त बुधवारे हाट? आफूलाई आवश्यक वस्तु एक गाउँ र अर्को गाउँ गरी ढुंडीरहनु पर्ने, खोला-नाला नतरी सुखै नहुने ।

एक दिन म आफ्नै घरको लुतै धन्दामा व्यस्त थिए । गोरू-भैंसीको गोबर सोहोर्ने, भैंसी दुहुने, घाँसपात दिने, बाख्रा-पाठा थन्क्याउने आदि । साँझ परिसकेको थियो, एक जना मानिस म नजीकै आउनुभयो जस्लाई चिन्न मलाई कुनै अप्ठ्यारै परेन, जो थियो मेरो एक अति नजीकको आफन्त ।

बेलुका कामधन्दा सिद्धाएपछि मैले वहाँसंग भलाकुसारी गर्न लागें । यही प्रसंगमा हजूर! कहाँबाट किन? मात्रै भनेथें जवाफ निस्क्यो - खसी । मलाई कुरा बुझ्न गाह्रो परेन, किनभने दशैंको बेला - हाम्रो संस्कार, परंपरा मोटो खसी महिनौं अघिदेखि आफैं पालेर वा खोजेर पनि आफू र जहान परिवारलाई ख्वाएर संतुष्ट गराउनु पर्ने । मेरो भने वहाँको खसी - को भन्ने शब्द सुन्नासाथ भएका तेज स्फूर्ति सबै ठप्प भएर मनमा तर्क-वितर्कका भावनाहरू विद्युत धारझैं तरंगित हुन थाले किनकी खसी खोजन काम विवश भएर मैलेनै गर्नुपर्थ्यो । म शाकाहारी मान्छे, धार्मिक दृष्टिले मासु नखाए पनि मनु स्मृतिको उक्ति अनुसार आठ किसिमका खानेवाला नरकगामीहरू मध्ये किन्नेवाला पनि एक हो -

हन्ता च अनुमन्ता च विशस्ता क्रय विक्रयो
संस्कर्ता चोप हर्ता च खादकाः चाष्टः घातका ॥

भन्ने कुरा पनि याद आयो । 'सुर मुनि देखि भुसुनासम्म' लेखनाथ पौड्यालको, 'गाई हात्ती र चाण्डाल कुत्ता सर्वत्र वाहुन' भन्ने श्रीकृष्णले अर्जुनलाई दिएका गीताको कथनले पनि मलाई साँच्चै कुनै पनि जीवको हत्या गर्नु पापै हो भन्ने मनले किटान गरिसकेको थियो । मानिस कस्तो मतलबी? जिब्रोको क्षणिक आनन्दको लागि अर्काको जीवन टुक्याउने, अर्काको सुख सयल र जीन्दगीको कुनै पर्वाह नगरी निजी स्वार्थ पूरा गर्न अन्याय, दमन र हत्या जे पनि गर्न पछि नहट्ने, यसर्थ नि मासु खाने भएकाले होला ईश्वरको एउटै सृष्टिमा पनि दुइ जात मानव र दानव?

मैले सोचें मासु नखानु पुर्नजन्ममाथि आस्था राख्ने अध्यात्मवादी मात्रै भएर हैन रहेछ । चार्वकका अनुयायी एकजना पश्चिमी डाक्टरले प्रत्यक्ष भनेको सुनेको थिएं, धेरैजसो यूरोपेली तथा पश्चिमी देशका मानिसहरू पनि धर्मको हेतु नभइ रक्तचाप एवं अन्य भयानक रोगको कारण शाकाहारी हुन्छन र उनीहरूनै मांसाहारीभन्दा दीर्घायुका हुन्छन् भन्ने ।

अध्यात्मवादी भनेर म हरि ॐ तत्सत् भनी सीधा यजमानलाई ठग्ने कट्टर बाहुन पनि त होइन, बरु 'कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन' को पखुवा हुँ। एकोहोरो सबै भरोशा ईश्वरकै भनेर बसेर पनि आहार, निद्रा, भय, मैथुन यी पाशवीक गुण सिवाय अरु के उन्नति हुन सक्ला र? तसर्थ कर्तव्यको पालना गरी सत्कर्म तर्फ प्रवृत्त भएमा नै आत्मोन्नति एवं राष्ट्रोन्नति गर्न सकिन्छ र जीवन सार्थक बन्छ। कर्तव्य पालन गर्नुनै धर्म हो। यसैले आध्यात्मिक तथा भौतिक दुवै दृष्टिबाट आफू शाकाहारी भएकोमा आत्म संतुष्टि र आत्मिक गौरवको मीठो आल्हाद भने अर्न्तहृदय देखिनै टुसाएर वृद्धि भइरहेको अनुभूति भइरहेथ्यो।

रात बित्यो विहान भयो, जाने बेलामा वहाँले मलाई जिम्मा लगाउनु भयो खसी खोज्ने कामको। परिस्थितीले मानिसलाई दास बनाउँदो रहेछ मैले यी सबै कुराहरुलाई जानी-जानी पचाएर पनि जिम्मा लिन बाध्य भएँ।

भोलिपल्ट खसीको खोजिमा हिडें। यो कुरा गाउँमा प्रायः सबैलाई थाहा थियो, यो मासु नखाने मान्छे भनेर। अतः लाचारीको संकेत जति छिपाउन खोजेपनि ज्हन निक्लन खोज्थ्यो अपराध झैं। अपराधको जिन्नी नभएपनि बोल्छ भनेको ध्रुव सत्य कुरा नै रहेछ, मलाई त्यस्तै लाग्न थाल्यो। त्यसैले किनबेचका कुरामा आफूलाई पूरै ज्ञान नभएपनि थोरै ज्ञान त थियो नै अपितु अनभिज्ञ जस्तै बनी सवाल जवाफ चाहिने मात्रामा पनि नगरी महँगैमा खरिदें।

दिन मध्यान्ह ढलिकसकेको थियो आफ्नो घरधन्दा कता, खानु कता? खसी आफैले डो-याएँ, टाडको बसाइ, छोडेर जाने मन उस्को नभएपनि अर्काको पञ्जाको, पैसामा बेचिने जीन्दगी मैले खरिदेर मेरै भएपछि उस्लाई पछि लाग्न बाध्य हुनुप-यो। कराउदै-कराउदै आफ्नो जीन्दगीको अन्तिम आइसकेको संकेतको ज्ञान भएर त होला बारबार कराउदै पछि लाग्यो। न त्यसलाई हिंड्ने बानी, न घाम-पानी पचेको, भोक भोकै कतिवेर हिंड्नु र? थच् थच् बस्न थाल्यो। उस्को अवस्था देखेर भित्रैदेखि दया लागेर आउँथ्यो, हृदयमा नराम्रोसँग घोचेर दुखेको अनुभूति हुन्थ्यो, दुखेर के गर्नु? अलि अलि आत्मा परात्माको छायाँ मात्रै पनि न परेकालाई। उस्को हिंडाइको गति देख्दा क्रोध तत्काले उठ्थ्यो वासमा पुग्नु पर्ने, उ मरे तुल्यजै भएर कराउथ्यो - म जबर्जस्ती तान्थे।

मेरो सबै भाषा नबुझे पनि म उस्लाई भन्थे - के गर्छस्? संसारनै यस्तै छ धनीले गरीबलाई, बलियोले निर्धोलाई, बाठाले सोझालाई मनपरी गर्ने। यदिनखेर उ मौन थियो, सुनीरहेजै लाग्यो। अनि फेरी शुरु गरे - तं पहिलेनै ठगिइ सकेको छस्, तं बोकोनै रही रहिस् भने कामुक भइ दुब्लाएर मासु कम हुन्छ र तेरो मूल्यमा पनि कम हुन्छ भनेर तेरो स्वतन्त्रतामा बन्चरो त उहिल्यै परिसक्यो। अब त तेरो जीवनको कुनै मूल्यनै छैन, तेरो बाँच्नुको सार्थकता पो के छ र? बाँच या मर्। हुन त बोकाकै अवस्थामा भए पनि जीवनको अन्त्य हुने अन्तिम चाला त उही नै हो। यतिञ्जेलसम्म उ चूप नै थियो।

कारुणिक जीन्दगीको चिन्तन गर्दै कहिल्यै भेट नहुने, हृदयमा सदैव चस्का दिलाइरहने सहयात्री दय गन्तव्य स्थानमा पुग्यौं। त्यो रात मेरो लागि कहिल्यै बिर्सन नसक्ने रात बन्यो। शिथिल, थकित, जीउ निदाउन खोज्ने जति प्रयत्न गरे पनि आरामको बिपरित छटपटी भईरहन्थ्यो, किनकी छलकपट, डाह, इर्ष्या स्वार्थ रहित, अमुक, पवित्रात्मी सहयात्रीको निकट भविष्यको वियोगान्त वेदनाले।

अस्तु।

# सिकौं साथी

- सरला गुरुङ्ग
कक्षा १०, श्री दुल्लभ मा.वि.

हामी त्यो फूल बन्न सिकौं साथी
जसको सुवास चारैतिर फैलियोस्
हामी त्यो दीप बन्न सिकौं साथी
जसको प्रकाश चारैतिर फैलियोस् ।

हामी त्यो बानी बसाल्न सिकौं साथी
जसको प्रभावले अरुको मनले सदा आशीक दैओस्
हामी त्यो मित्र बन्न सिकौं साथी
जसको गुणले मित्रको मन सदा रमाउन सकोस् ।

हामी त्यो विद्यार्थी बन्न सिकौं साथी
जसको प्रभाव राम्री परोस्
हामी त्यो उपकार गर्न सिकौं साथी
जसको सुवास चारैतिर फैलियोस्

अनि,
हामी कैयन कुरा जान्दै जाऊँ साथी
जसले समाज र देशको हित हुन सकोस्
हामी यो दुल्लभलाई सिंगार्दै जाउँ साथी
जसको आशीरवांद सदा शिरोपर रहोस् ।

---

## कर्म गर तर फलको आशा नराख

- गीतामा भगवान् कृष्ण

---

(कविता)

## विद्यार्थी हामीले

- राजेश श्रेष्ठ
कक्षा १०, श्री दुल्लभ मा.वि.

पृथ्वीनारायण शाहले लगाएका आगहरू
पूरा गरिछाड्नु छ विद्यार्थी हामिले
वीर शहीदहरूको सपना समेतलाई
साकार रूप दिनु छ,
सदाभरि विद्यार्थी हामीले

*****

## म के रहेछु

- मोदराज भट्ट
मसेल

झरना होइन म बगेको पानी रहेछु
प्रकाश होइन म अंधेरी रात रहेछु
मुना होइन म ओइलिएको पात पो रहेछु
कर्तव्य कहाँ छ तर म कता पो गएछु

दिप्त होइन म ग्रहजस्तै अदिप्त रहेछु
शीतल होइन म हिउँदको ठण्डी रहेछु
न्यानो होइन म गर्मीको लु रहेछु
भुल्छु भनेको थिएँ तर ओइलाई गएछु

विपना होइन म सपना रहेछु
बतास होइन म चैतको हुरि रहेछु
सागर होइन म उर्लदो लहरे रहेछु
आज भन्दा भन्दै म भोलि पो भएछु ।

मानिसको आँसु मानिसले पुछ्नु सबैको धर्म हो
- देवकोटा

## विश्व प्रसिद्ध तीन टावर

१- **सियर्स टावर।** अमेरिकाको शिकागो शहरमा रहेको यो टावर ११० तल्लाको छ । यसलाई बनाउन ७६,००० टन स्टिलको प्रयोग भएको छ । यसको उचाई १७०७ फिट छ । यसलाई बनाउन प्रयोग गरिएका कंक्रिटहरूमात्र प्रयोग गरेर बाटो बनाउने हो भने ८ वटा मोटर एकैपल्ट लहरै हिंड्न सक्ने पाँच माईल लामो सडक बन्न सक्छ । यसको अनुमानित तौल २,२२,५०० टन छ । दैनिक १२,००० कामदारहरूले काम गर्दा यसलाई बनाउन तीन वर्ष लागेको थियो । विश्वको सबभन्दा अग्लो टावर यो नै हो ।

२- **टोकियो टावर।** यो विश्वको दोस्रो अग्लो टावर हो । यो जापानको राजधानी टोकियोमा छ । तीन सय तेत्तीस मीटर अग्लो यो टावर निकै बलियो छ । प्रति सेकेण्ड ९० मीनेटका दरले बहने आँधी-बेहरीसंग सामना गर्न सक्ने यस टावरको एन्टेनाबाट टोकियो भरि नै ८ वटा टि.भी. कार्यक्रम र तीनवटा एफ.एम्. रेडियो कार्यक्रम समेत प्रसार हुन्छ । यो टावर संग्राहलय समेत बनेको छ । यहाँ राखिएका कृषि सम्बन्धी संग्रहहरू विशेष बत्ती र ध्वनीको कारणबाट जीवन्त देखिन्छन् । यसमा ८००० थरीका जीउँदा माछाहरू पनि देख्न पाइन्छन् ।

३- **एफेल टावर।** यो टावर फ्रान्सको राजधानी पेरिसमा छ । तीनसय बीस मिटर अग्लो यो टावर बनाउन झण्डै २ वर्ष लागेको थियो । यो टावर स्टिलले बनेको छ । मार्च १९८९ मा तयार भएको यस टावरको तौल ७,३४० टन छ भने यसलाई बनाउँदा ७७,९९,४०१ फ्रैंक खर्च भएको थियो । यसमा १७९२ वटा खुड्किला छन् । यसलाई बनाउन दुई वर्ष, दुई महिना, दुई दिन लागेको थियो ।

---

**प्रिय बचन बोल्नेहरूको शत्रु कोही पनि हुँदैन**

- चाणक्य

(कविता - शार्दूल विक्रीडित छन्दमा)

# दुल्लभ ज्योतिषप्रति श्रद्धाञ्जली

- कपिल देव भट्टराई
शिक्षक, श्री दुल्लभ मा.वि.

आयौ दुल्लभ ज्योति पुञ्ज सरि भै नेपालको व्योममा,
चम्कायौ निज धर्तिलाई तिमिले प्रकाश पोखी यहाँ ।
बिर्सी बिर्सी सकिन्न हे यूग पुरुष। तिम्रो त्यो सद्‌भावना,
तिम्रो दिव्य सुवाणि ज्ञान रसले कृतार्थ छौं सब् जना ॥

(१)

तिम्रो नाम र कामको सुयशले निर्माण भो मन्दिर,
रम्छौं हामिहरू त्यो ज्ञान रसमा लेटी छहारी तिर ।
त्यस्तो सुन्दर रम्य कुञ्ज बिचको त्यो उच्च भूमीमहाँ,
मीठो दिव्य सुधा त्यो ज्ञान रस ता छोडी गएथ्यौ जहाँ ॥

(२)

तिम्रो दुर्लभ त्यागको प्रतिफलै फुल्दैछ हे दुल्लभ।
अज्ञानी जनलाई ज्ञान रसको मिल्दैछ ज्योति अब ।
सम्झन्छौं तिमिलाई दिन् दिन् यहाँ जोडि सदा अञ्जली,
मिली हामीहरू सदैव तिमिमा दिन्छौं नि श्रद्धाञ्जली ॥

(३)

श्रद्धाको कुसुमै लिएर तिमिले सन्तुष्ट भै मनमहाँ,
देऊ यूगपते समान रूपले सद्‌बुद्धि हामी महाँ ।
पायौं आशिष ता भने यदि यहाँ गर्नै केही आँटको,
बाल्छौं हामीहरू सदा सजग भै त्यो ज्योति लौ ज्ञानको ॥

(४)

पुज्नेछन् तिमीलाई ज्ञानी जनले सदैव पक्कै पनी,
मान्नेछन् तिमीलाई भावि जनले हौ देव तुल्यै भनी ।
तिम्रो नाम सदैव काव्य जगमा फुल्नेछ पुष्पै सरी,
तिम्रो त्याग र ज्ञान ज्योति सरि भै सिल्नेछ धर्ति भरी ॥

(कविता)

# पैसा

- प्रेम बहादुर न्यौपाने
आरूपोखरी, आरू सिस्नेरी
वडा नं. ५, गोरखा

पैसा छ शेर धन औ बल तेज जान
पैसा भए छ रहने सब थोक मान
मै हूँ भनेर पनि ता सब देखि शेखी
रित्तो भएर जब उँड्दछ हात देखि ॥१॥

चिन्ता बढाउँछ यही मन भित्र ज्वाला
यो दुःखको बन्छ खराब चाला
पैसा हुँदा पुछिदिनु दुख आँसु दाना
गर्नु सकभर उपकार नठान्नु साना ॥२॥

## नेपालमा कार्यरत शिक्षकहरू

| | |
|---|---|
| प्राथमिक विद्यालय शिक्षकः | ५७२०४ |
| निम्न माध्यमिक विद्यालय शिक्षकः | ११९८ |
| माध्यमिक विद्यालय शिक्षकः | ९१४३ |
| जम्माः | ७८३३६ |

## नेपालमा माध्यमिक विद्यालय तहसम्म अध्ययनरत विद्यार्थीहरू

| | |
|---|---|
| प्राथमिक विद्यालय तहका विद्यार्थी | २१०८७३९ |
| निम्न माध्यमिक तहका विद्यार्थीः | ३०५४०९ |
| माध्यमिक तहका विद्यार्थीः | ३००५३४ |
| जम्माः | २७२१६८२ |

## २०४५ सालको आँकडा अनुसार नेपालमा विद्यालय संख्या

| | |
|---|---|
| संस्कृत माध्यमिक विद्यालय | ६९ |
| प्राथमिक विद्यालय | १३५१४ |
| निम्न माध्यमिक विद्यालय | ३८९७ |
| माध्यमिक | १६६८ |

(कविता)

## समय

- वासुदेव कोईराला
कक्षा १०, श्री दुल्लभ मा.वि.

गफ गरेर न उडाऊ मलाई
सुतेर न रित्याऊ मलाई
मेरो परिचय लिने हो यदि भने
केही सिकेर विताऊ मलाई

समय बितेर गयो भन्ने संग म
मितेरी लगाउन चाहन्छु
मेरा पछि लाग्ने संग म
उसको काम संघाउन चाहन्छु

अमेरिकाको तुफानमा
जान मन लाग्छ मलाई
जापानको समयसंग दाँजिन मन लाग्छ मलाई
तर के गर्नु?

घडी र रेडियो के चाहियो उसलाई
समयको याँद राख्दैन भने
विकास मात्र खोजेर के गर्नु
मेरो परिचय नै पाएको छैन भने

---

### रोचकता:

एक दिन एक नेपाली शिशीमा दूध लिएर आउँदा ठेस लागी लडेछ र शिशी फुटेछ । हत्तरपत्त फुटेको शिशी जोड्दै गर्दा एक अमेरिकी आई पुगेछ । अमेरिकीले सोधेछ "what?" नेपालीले पनि तुरुन्त जवाफ दिएछ "शिशी प्वाट" ।

---

(कविता - तीजको लीक लयमा)

# नारीको देन

- सुश्री योगलक्ष्मी भट्ट
शिक्षक, श्री दुल्लभ मा.वि.

- १ -

नारी माथि अत्याचार व्यावहारिक जेल-नेल
अझै गर्छन दाजुभाइ हामी माथि खेल
ब्रह्माजीको सृष्टिदेखि हामी अघि परेका
सीता जी र भृकुटीले ज्ञान छरेका

- २ -

लोकको सृष्टि गरनमा नारीकै छ ठूलो हात
हाम्रो पनि साथमा होला विकाशको सात
हामी पनि नागरिक देशको मापदण्ड हौं
देशको लागि मरि मेट्न पछि हट्दैनौं

- ३ -

पुरुषहरू पैदा हुन्छन् हाम्रै कोखमा
जन्म यिनले यही लिन्छन् भुईंमा खसेर
हाम्रै जीउको रस चुस्छन् आफ्नो पेट भर्नलाई
हामी सधैं खडा हुन्छौं दुःख हर्नलाई

- ४ -

पैलो शिक्षा कहाँबाट आर्जन गर्छन् यिनले
सधैं भरि धिक्कालिन् जन्मभूमिले
नारी निन्दा गरी-गरी जन्मभूमि नरुवाऊ
पालन पोषण गर्ने हामी धोका न खुवाऊ

- ५ -

जीवनको बाटो हिँड्दा हाम्रै भर पर्दछौं
हामीलाई नै दबाउन अनेक गर्दछौं
पतिव्रता भई बस्ने नारीहरू कति छन्
पत्नीव्रता हुने पुरुष कहाँ भेटिन्छन्

(कविता)

## मान्छे बन

- राम कुमार अंगाई
कक्षा १०, श्री दुल्लभ मा.वि.

कतै अलिकति चिमोटिएर
कतै अलिकति निमोठीएर
बाँच्न नमान्दा नमान्दै पनि
हाँस्न नमान्दा नमान्दै पनि ।

मान्छे तिमी मान्छे हौं
थोरै ठाउँ छ वर्तमानमा
धेरै नाउँ छ इतिहासमा
मान्छे तिमी मान्छे होऊ ।

---

## जान्नु पर्ने कुराहरू

१- सम्बत् १९९० पुस-माघ (सन् १९३५ जनवरी) मा नेपालमा सर्वप्रथम एस.एल.सी. परीक्षा सञ्चालन भएको थियो । प्रथम पटकको एस.एल.सी. परीक्षामा जम्मा ३४ जना परीक्षार्थीहरू थिए । चौंतिस जना मध्ये छात्रा १ जना र छात्र ३३ जना थिए भनेः

| | |
|---|---|
| उत्तीर्ण | १९ |
| अनुत्तीर्ण | १४ |
| अनुपस्थित | १ |

२- एक मिनेटमा ५ जनाको दरले गर्दा विश्वमा २४ घण्टामा दुर्घटना बाहेक ७२०० मानिस मर्छन् ।

३- एक सेकेण्डमा दुईवटाको दरले जन्मँदा २४ घण्टामा विश्वमा ३४५६०० बच्चा जन्मन्छन् ।

(कविता)

## शहीद

- सुरेन्द्र श्रेष्ठ

शहीद तिमीले आफ्नो कर्तव्य पूरा गरि सकेका छौ
तिमीलाई धन्य छ ।
तिमीले पाएका कष्टहरू र
तिमीले भोगेका मारहरू
हाम्रा निम्ति प्रेरणाका श्रोत हुन्
तिमी पूज्य छौ
तिमी आदर्श छौ
शहीद तिमीले ...

---

## रमाईलो

साह्रै मन मिल्ने किसिमका दुई जना साथी रहेछन् । ती दुईमा एउटाको नाम "दिमाग" रहेछ र अर्काको चाही "थाहा छैन" रहेछ । ती दुवै हरसमय साथै रहन्थे र सितिमिती छुट्टिन्नथे । एक दिन ती दुवै घुम्न भनी बाहिर निस्केछन्, "दिमाग" लाई पिसाव फेर्न मन लागेछ र ऊ पर गएछ, र "थाहा छैन" मात्र बाटामा उभिएछ । त्यसैवेला परबाट आएको एकजना मानिस नजिकै आएर उसलाई सोधेछ, तिम्रो नाम के हो? उसले जवाफ दिएछः "थाहा छैन", त्यो व्यक्तिले फेरी सोधेछः "तिम्रो नाम के हो भनेको?", उसले जवाफ दिएछः मेरो नाम "थाहा छैन" । सोध्ने व्यक्तिलाई रिस उठेछ र भनेछ, "तिम्रो त दिमाग पनि छैन कि के?" उसले तुरुन्तै जवाफ दिएछ, "छ मेरो दिमाग त छ तर पिसाव फेर्न गएको छ ।"

---

जब धन बोल्दछ, तब सत्य चुप रहन्छ

रूसी उखान

---

ता)

## नेपाल आमाको सन्देश

- कृष्ण कुमार, वि.क.
धयाम्पेसाल

नेपाली आमा निराश हुन्छिन्, हामीले निदाए
नेपाली आमा झन् सुखी हुन्छिन् हामिले ब्यूँझिए
अरुको भरमा नपरौं हामी आफूनै उर्लिए
देशको अरुलाई आवाज दिएर कुर्लिए ॥१॥

देश हाम्रो सानो नाम हाम्रो ठूलो पूर्खाको नामले
देश हाम्रो सानो नाम छ ठूलो पुर्खाको शानले
खोला र नाला झरना र पर्वत घनन घन्केका
शिक्षाको दीप बत्तीको दीप विस्तारै चम्केका ॥२॥

---

## हामी नेपाली

- दीपक देवकोटा
जराङ्ग टारी, गोरखा

पहाड वारी पहाड पारी कोइली बोलेको
मुलुक कुन? हिमाल माथि बादल चलेको
हिमाली कुना नैपाली पन त्यो चरी बोल्दछ
वनका वन सुपुत्र जन झुप्रोमा खेल्दछ

यो माटो प्यारो यो बाटो प्यारो मुलुकै पौरख
पुछेर जान्न नेपाली पन संस्कृति गौरव
फुटेर हैन जुटेर बन्छ आमाको सपना
नेपाली दिल मिलेर बन्छ स्वर्गको थपना

---

"न भक्ति भो ज्ञान न भो विवेक
आखिर श्रीकृष्ण रहेछ एक"

- देवकोटा

(कविता)

# प्रजातन्त्रको प्रभात

भू.पू.शि. - कृष्ण प्र. घिमिरे
दुल्लभ मा. वि. गोरखा

नेपाली जनका गए सबै काला, अध्यारा दिन
आयो स्वर्णिम याम यो मुलुकमा साह्रै खुशीको दाण
छायो मौलिक भावना चहकिलो नौलो बिहानी सरि
नेपाली दिन देखियो जगतमा मीठो संगाली सरि

आफ्नो भाग्य बनाउने बखतमा हामी उठाउँ शिर
सबै मिलिजुली सप्रिन्छ यो तग्दिर
हाम्रो देश जसै हुनेछ हरियो आदर्शको नर्सरी
हाम्रो प्रजातन्त्र देखिन्छ सर्वोपरी ।

कालो तत्व गिराउने सफलता हामी जुटे मिल्दछ
हाम्रो सत्य र धर्म विजय हो संसारले चिन्दछ
नेपाली अनुहारमा गहकिलो विश्वासको मन्त्र छ
नेपाली इतिहासमा चहकिलो, प्यारो प्रजातन्त्र छ ।

चोखो मानवता हुने मुलुकमा अन्याय भेटिन्न रे
हाम्रो बोल्न र लेख्न हक कसै मेटेर मेटिन्न रे
भ्रष्टचार, कुकर्म, तस्कर सबै निर्मूल पारिदिन्छु म
नेपाली गरिमा उचाल्न नदिने पापिष्ठ मारिदिन्छु म

हामी एक बनी जुटे मुलुकमा पापी सबै गिर्दछन्
छर्दै शान्ति प्रभातका किरण ती नेपालमा छिर्दछन
हामी देश उठाउने प्रण गरौं बाजी छ यो उत्तम
आफ्नै कर्मठ कर्मम रत हुने बेला छ सर्वोत्तम

* * * * *

(कविता)

# अतितको संरुना

विहानको मिमिरेले, सगरमाथा ननाध्दै ।
रुर्छन उसका संधै अतितका घटनाहरु ।
उनि भन्थे होस गर है यदि मान्छौं भन ।
उसलाई के वास्ता ।
ठानिसकेको छ अ.त. ।

एकदिन यस्तो भयो जुनदिन साधूको संज्ञा पायोरे ।
उसलाई क्चाउनेले पोलेको तुङ्गा खायो रे ।
त्यति मात्र कहां होर रमितेले त तातो सिसानै पायो रे र
ऊ कहा थियोर याहाको, परैकोपो थियो रे ।
उसलाई के वास्ता ।

जो सुकै म-योसरे ।
आखिर त्यहीदिन, उसको याद आयोरे ।
जे हुनु भएपछि वल्लपो दैलो देख्योरे ।

– श्याम लामिछाने र श्रेष्ठ
स्नातक प्रथम वर्ष गोरखा क्याम्पस

---



---

(कविता)

## ' तिमी प्रतिष्ठित बन '

– शुशिला भट्ट
वि. एड. प्रथम वर्ष
त्रि. वि. कीर्तिपुर

त्यो समय त भारी निष्ठूरी पो रहेछ,
आफूसँग लगाउँदै यति तिब्र वयस्क पो बनाएछ,
तर त्यो पनि नराम्रो त हुदैन ।
तिम्रो सहनयतले हाम्रो मस्तक पनि त झुक्दैन ।
थाहै नपाईकन कति बाधा पन्छाई एकवीस र पाँच पो भएछौं,
तर तिमीलाई गर्व त अवश्य छ, कलिला दिमागलाई परिमार्जित पारिदियौं,
तिमी त भवजलधीको, विश्वास र साहस बोक्ने डुंगा पो रहेछौं,
सारा गन्तव्यस्थानमा पुग्ने यात्रुको "दुल्लभ" तिमी त प्रतिष्ठित पो भएछौं ।

---

## आजको वालक

मध्यरातको सन्नाट समय । अधेरीरात वर्षा ऋतुको । एक वालक दोवाटोमा आँखा छोपी रोहिरहेछन् सबै अधेनिन्दामा । सबै आफ्नो ओछ्यानमा छाम्छन् बपुराहरु । सबैको आफूसँगै तर ऊ रोहिरहेछ अँझै हराउँदैन कसैको । ऊ रोहिरहेछ, रोहिरहेछ - आर्तनाद वेदनामा ।

लुम नाथ लामिछाने
स्नातक, प्रथम वर्ष
गोरखा क्याम्पस

---

(कविता)

## ज्योति छर्दै जाऊ

- कृष्ण कुमार श्रेष्ठ
शिक्षक, श्री दुल्लभ मा.वि.

दुल्लभ छर्दै जाऊ तिमी
यस धर्तीमा ज्योति
प्रत्येक कलिला मस्तष्किमा
अनि प्रत्येक भविष्यका कर्णधारमा
ज्योति छर्दै जाऊ ...

जिल्ला र राष्ट्रमा मात्र होइन तिमी
संसार भरि नै फैलिनु पर्दैछ
डाक्टर र ईन्जिनियरमा मात्र होइन तिमी
देशको लागि आवश्यक
प्रत्येक सम्बाहरुमा
ज्योति छर्दै जाऊ ।
ज्योति छर्दै जाऊ ।।

---

# ज्ञान-विज्ञान

१- भारतको सबभन्दा पुरानो अखबार "द टाइम्स अफ इण्डिया" हो ।

२- भगवान शंकरको नृत्य अवस्थाको नाम "नटराज" हो ।

३- मानिसको शरीरको अंगमध्ये आजीवन नबढ्ने अंग आँखाको नानी हो ।

(कविता)

## सच्चाईको साथी इतिहास

- नवराज भट्टराई
मसेल, गोरखा

मलाई चाहिन्छ ती दुई आँखा
जसले बस्तुस्थिति देख्न सकोस्
मलाई चाहिन्छ ती दुई हात
जसले न्यायको तराजु थाम्न सकोस्
मलाई चाहिन्छ एउटा यस्तो मन
जस्लाई कैही पनि इच्छा नहोस्
मलाई चाहिन्छ एउटा यस्तो बाटो
जसमा पग-पगमा काँडा नहोस्

त्यस्तो दिन सक्ने

ती योग पुरूष दुल्लभ
जो मरेर पनि बाँचि रहे
दुल्लभ दुल्लभको इतिहासमा
आलोकित मुस्कान बोकी हाँसि रहे ।

---

## नेपाल प्रति

- खुमादत्त न्यौपाने
आरू सिस्नेरी वडा नं. ५

नेपाल आमा भन्छिन् सँधै हे नेपाली वीर
अघि बढ देश बनाऊ न झुकाउ शिर
देशलाई धनी बनाऊ कमाएर सीप
विदेशीको नजरमा वन तिमी दिप ॥१॥

सीताजीको सीप अनि जनकको ज्ञान
विश्वभरि फैलाइ देऊ यो देशको शान
कर्तव्यलाई पछ्याएर वन ज्ञान शाली
बनाउनु हुन्न देश अपुरो र खाली ॥२॥

---

# नेपाल जुनियर रेडक्रस सर्कल

- जर्नादिन भट्टराई
शि. नायक, श्री दुल्लभ मा.वि.

जुनियर रेडक्रसको मूल मन्त्र "म सेवा गर्छु अथवा सेवा ही परमो धर्म" बाट अभिप्रेरित भएर यस विद्यालयमा पनि २०३८ सालमा नेपाल जुनियर रेडक्रस सर्कलको स्थापना गरिएको थियो । स्थापना कालदेखि अहिलेसम्म यसले बिभिन्न कठिनाईहरूलाई पार गर्नुको साथै बिविध सहयोग र सेवा उपलब्ध गराउँदै आएको छ ।

बिविध शीर्षकमा बेला-मौकामा सहयोग गर्नुको साथै विद्यालयको वातावरण र हाता सँधै सफा र स्वच्छ रहोस भन्ने हेतुले छात्र र छात्राको चर्पी निर्माणको निम्ति यसै २०४८ सालमा रु. २००० सहयोग ग-यो भने विद्यालय आँगनमा सर्कलकै सक्रियतामा करिव रु. ३२०० को लागतमा सरस्वतीको मन्दिरको निर्माण समेत भएको छ । छिमेकी विद्यालयमा समेत यसको स्थापनाको निम्ति सहयोग गरियो ।

शैक्षिक वर्ष २०४७।०४८ को निम्ति जु.रे.स. को कार्यकारीणी समितिमा निम्न महानुभावहरू रहनु भएको छः

| | |
|---|---|
| अध्यक्ष | श्री रैशम भट्ट |
| उपाध्यक्ष | श्री रवीन्द्र धिताल |
| सचिव | श्री सीताराम बन्जारा |
| सह-सचिव | श्री चन्द्रमान श्रेष्ठ |
| कोषाध्यक्ष | श्री सरला सिंखडा |
| सदस्य | श्री शिल प्रसाद पनेरू |
| सदस्य | श्री तौयनाथ भट्ट |
| सदस्य | श्री सन्जय गुरूङ्ग |
| सदस्य | श्री सुवास अधिकारी |
| सदस्य | श्री भीमसेन वानियाँ |
| सदस्य | श्री हेमराज भट्ट |

**हामी सेवा गरौं**

(गद्य कविता)

# शहीदको सम्झनामा

- श्री हिरामान श्रेष्ठ
शिक्षक
श्री दुल्लभ मा.वि., ध्याम्पेसाल

मातृभूमीको वात्सल्यप्रेमी काखमा लुटपुटीदै
अतीतको घटनाहरूको संस्मरणको लागि
स्मृतिको डायरी पल्टाउँदै
शोकाकुल भईरहेछौं तिमीलाई सम्झदै
न्यायको पक्षमा बुलन्द आवाजहरू
भोका नाङ्गा जनताको रोदन र विस्मादहरू
पिडीतहरूको चिच्याहटलाई हृदयङ्गम गर्दै
मुक्तिको यात्रामा हिंड्दा हिंड्दै
दुस्मनको बन्दुकबाट निस्कैको
निर्दयी कठोर गोलीबाट
तिम्रो निर्मम हत्या भयो
त्यही भयभीत कालरात्रीमा ।
वीर सपुत
जुन लक्ष्यको निम्ति तिम्रो देहावासन भयो
यो जन्मभूमीको इतिहासमा
अङ्कित भएको छ स्वर्णीम अक्षरले ।
यद्यपी
तिम्रो मरण सामान्य छैन
एक थोपा रगत बराबर
लाखौं कर्मठ वीर योद्धाहरू
नयाँ जोश, उत्साह र उमङ्गहरू बोकेर
स्वतन्त्रताको विगुल बजाउँदै
लाखौं लस्करहरू तिम्रो नाम र अमर वाणीहरू
मुक्तकण्ठले गाउँदै
अगाडि बढेका छन् बलीदान हुँदै हुँदै
तिम्रो सपना साकार पार्न ।
देशभक्त योद्धा
तिम्रो ती सारगर्भीत उद्गारहरूले
हामीलाई जुन पाठ सिकाएको छ
प्रत्येक नेपालीको पवित्र हृदयमा
स्पातको खम्बा भएर बसेको छ
यसर्थ
जनताको निम्ति आत्मा बलिदान गर्नेलाई
जनहित नै स्वर्गीय आनन्द स्वीकार्नेलाई
हार्दिक श्रद्धान्जली एवं अविरल सम्झना ।

---

मानिसका चार पुरुषार्थको नाम होः
*धर्म, अर्थ,* काम र मोक्ष

सती र सावित्रीले कस्तो शक्ति फिकेर
मृत्यु र समयलाई बसै जीतेर
आमाको ममताले छोराछोरी हुर्कन्छ
नारीकै उत्थानले देश सप्रन्छ ।

---

## ज्ञान

१. १८ महापुराणहरूको श्लोक संख्याः ३४८००० छ ।

२. नेपालको सबभन्दा जेठो मानिएको गोरखापत्र वि.सं. १९५८ वैशाख २४ गते तत्कालीन प्रधानमन्त्री देव शमशेरको पालामा साप्ताहिक रूपमा प्रकाशन शुरू भयो । त्यतिबेला गोरखापत्र ५० देखि ६० प्रतिसम्म छापिन्थ्यो र बिक्री हुन्थ्यो । शुरूमा यसको आकार १/१२२ × ९ × ९ इन्चको थियो र ऐले यसको आकार २४ × ३३ रहेको छ । चन्द्र शमशेरको पालामा यो प्रकाशन कमजोर भई हप्तामा १३ देखि १८ प्रतिसम्म छापिन्थ्यो । बयालिस वर्ष पछि वि.सं. २००० सालदेखि यो हप्ताको दुई पटक छापिन थाल्यो । २०१७ साल फागुन ७ गते देखि गोरखापत्र दैनिक रूपमा छापिन थालेको हो । २०१९ साल असार देखि शनिवासरीय परिशिष्टाङ्क छापिन थालेको हो । हाल गोरखापत्रको प्रकाशन दैनिक ३० देखि ३५ हजार प्रति छ ।

---

व्याकरण शास्त्रका जन्मदाता "पाणिनी" दक्षिण भारतीय "पणि" नामका ब्राह्मणका छोरा हुन् ।

(कविता)

# " दुल्लभ फूलीरहोस ध्याम्पेसालमा "

- प्रमोद श्रेष्ठ "हर्ष"
ध्याम्पेसाल, गोरखा

माटो,
प्रकृतीको छाती कूल्चीएर
सौन्दर्यको पाठ पढाउदै छ
त्यही माटो,
अभागी मानिसको
भाग्य निर्माता बनीरहेछ
अनी

यही भाग्य सौन्दर्यताको
२४ वसन्तहरू
निर्लज्ज संग
ध्याम्पेसाल नामले
हिडीसकेछ,
अफसोच
ध्याम्पेसालको इज्जत बनेर
माटाका कणहरू
गुलाब र सयपत्री
टाढै छोडेर
दुल्लभ टुपी फूल
फूलाउन व्यस्त छ
के थाहा,
दुल्लभका कोपीलाहरू
आज,
डाक्टर ईन्जीनीयर बन्लान भनेर
यो देशका कर्णधार होलान भनेर
त्यसैले धन्य माटाका कणहरू
तिमीले ध्याम्पेसालमा
दुल्लभ टुपी फूल फूलाइ दियौं
फूलको इतिहासमा
दुल्लभको स्वर्णिम अक्षरहरू
सत्य कथा बनेर
युग युग बाची रहने छ
मानिस युग युग सम्म
इतिहास पढेर बाची रहने छ ।

# रमाइलो गणित

– भू.पू.शि. कृष्ण प्र. घिमिरे
दु.मा.वि., गोरखा

## गुणन गर्ने सजिलो तरिका

(१) २५ ले गुणन गर्ने विधि :-
जुन संख्यालाई २५ ले गुणन गर्नु पर्ने हो, त्यसलाई पहिले ४ ले भाग गर्ने भागफलको अन्त्यमा दुइटा शुन्ना थप्ने । जस्तै

(१) ८४०८ × २५

(i) ८४०८ ÷ ४ = २१०२
(ii) २१०२०० उत्तर

(२) ४४८०८ × २५

(i) ४४८०८ ÷ ४ = ११२०२
(ii) ११२०२०० उत्तर

(२) ५० ले गुणन गर्दा -
जुन संख्यालाई ५० ले गुणन गर्नु पर्ने हो त्यसलाई पहिले २ ले भाग गर्ने र भागफलको अन्त्यमा दुइटा शुन्न थप्ने ।

---